# प्रेस काउन्सिल नेपाल

## ३९ औं वार्षिक प्रतिवेदन

## आर्थिक वर्ष २०७०/०७१




**२०७१ असोज**

# विषय सूची



## अनुसूचीहरू



## WORLD ASSOCIATION OF PRESS COUNCILS (WAPC)

On behalf of the World Association of Press Councils (WAPC), I am pleased to send congratulations to: Mr. Borna Bahadur Karki, Chairman, and members, and staff of Press Council Nepal on the occasion of its 45th Anniversary.

Press freedom is one of the fundamental rights necessary for a democratic society. Press Council Nepal has been an important organization in Nepal's quest for democracy and justice.

The people of Nepal require excellence in journalism and a free and independent media. With 45 years of history and engagement in serious struggles for freedom, Press Council Nepal has acquired the wisdom and procedures necessary to help society accomplish these important goals.

Knowledge of the history of Press Council Nepal helps promote understanding of the many challenges facing a nation in transition to democracy. Once again, congratulations!

The WAPC is an international association of press and media councils that have pledged to uphold ideals of freedom of communication, independent media, and excellence in journalism.

The WAPC is comprised of member organizations from Azerbaijan, Hawaii (USA), India, Kenya, Malawi, Nepal, Pakistan, Seychelles, Tanzania, Turkey, the Turkish Republic of Northern Cyprus (TRNC), Uganda, and Zimbabwe.

Sincerely,

Chris Conybeare, Secretary General
conybeare@msn.com

# अध्यक्षको कलम

स्वस्थ पत्रकारिताको विकास, आचारसंहिताको पालना र सञ्चार नीतिनिर्माणको लागि सरकारलाई सुझाव दिने उद्देश्यका साथ २०२७ सालमा स्थापित यो संस्थाले साढे चार दशक लामो आरोह, अवरोह पार गरिसकेको छ । सञ्चारमाध्यम र पत्रकारहरुको बढ्दो संख्या र भूमिका वारे प्रेस काउन्सिल नेपालले वर्तमान र भावी दिनहरुमा गर्नुपर्ने कामका विषयमा गम्भीरतापूर्वक सोचविचार गरी नीति निर्माण गर्नु आवश्यक छ । आमसञ्चारमाध्यम र पत्रकारहरुको अभिभावक संस्थाको रुपमा रहेको प्रेस काउन्सिलले समयमै सही नीति निर्माण गर्न नसके उत्तरदायित्व पूरा गर्न नसकेको ठहर्छ ।

समयमै संविधान बन्न नसकेको कारण देशको राजनीति मात्र होइन हरेक क्षेत्र अस्थीरताबाट गुज्रिरहेको छ। यो अवस्थामा सञ्चार जगतको उत्तरदायित्व र जिम्मेवारी झन बढेको छ। यसको लागि सञ्चार जगतले खेलेको सकारात्मक पक्ष प्रभावी रहेपनि नकारात्मक पक्षहरु पनि उत्तिकै टिप्पणीयोग्य छन् । नकारात्मक पक्षहरुलाई समयमै न्यूनीकरण गर्न सकिएन भने सञ्चार क्षेत्रका उपलब्धीहरु संकटग्रस्त हुन समय लाग्ने छैन । प्रेस काउन्सिल नेपाल समयमै संविधान निर्माणका लागि सधैं सकारात्मक अभियानमा सहभागी छ ।

सञ्चारमाध्यमले राजनीतिक क्षेत्रको मात्र होइन, राज्यका अन्य निकायहरु, सार्वजनिक सरोकारका व्यक्ति र संस्थाबाट भएका विकृति र विसंगतिहरु पनि उजागर गर्दै आम जनतालाई सुसूचित गर्ने महत्वपूर्ण भूमिका निभाउँदै आएका छन् । जसबाट समाजका विकृति र विसंगति नियन्त्रणमा उल्लेखनीय सहयोग पुग्दै आएको छ । सञ्चारमाध्यमको सकारात्मक पाटो यस्तो छ भने पत्रकारिता पेशाका मूल्य, मान्यताको उल्लंघन गर्दै आफ्नो निहित स्वार्थ पूरा गर्न गैर जिम्मेवारीपूर्ण कार्य गर्ने सञ्चारमाध्यम र पत्रकारहरुको संख्या पनि बढ्दैछ । सञ्चार माध्यममा अपारदर्शी लगानी गरी आफ्ना अनुचित धन्दा संरक्षण गर्ने, निश्चित योग्यता र क्षमता विना नै पत्रकारिता पेशा गर्न पाउने स्थिति, सञ्चारमाध्यमलाई राजनीतिक हथकण्डाको रुपमा प्रयोग गर्ने, श्रमजीवी पत्रकारलाई काम लगाउने तर पारिश्रमिक नदिने, सञ्चार माध्यमको संख्या द्रुत गतिमा बढ्ने तर गुणस्तरको स्थिति झन खस्किँदै जाने आदि नकारात्मक प्रवृत्ति उल्लेखनीय छन् ।

हिजोको राजधानी केन्द्रित राजनीति गाउँ उन्मुख भएको छ । गाउँमा पुगेको राजनीतिलाई संस्थागत गर्न मोफसलका सञ्चारमाध्यमको भूमिका निकै महत्वपूर्ण हुन्छ । तर मोफसलका सञ्चारमाध्यमको अवस्था त्यस्तो भूमिका निभाउन सक्ने स्थितिको छैन। मोफसलको पत्रकारितालाई कसरी सक्षम र प्रभावकारी बनाउने भन्ने गम्भीर चुनौती छ । मोफसलका सञ्चारमाध्यमलाई टिकाउन र प्रभावकारी बनाउनका लागि नीति र कार्यक्रम बनाउन विलम्व गर्न हुँदैन । त्यस्तै गरी महिला, जनजाति, आदिवासी र पिछडिएका क्षेत्रका पत्रकारहरुलाई टिकाउने र नयाँलाई आकर्षित गर्ने नीति र कार्यक्रमको आवश्यकता पनि खड्किँदै गएको छ । सञ्चारमाध्यम र पत्रकारहरुको भूमिका दिन प्रतिदिन बढ्दै मात्र होइन, संवेदनशील पनि बन्दै गएको छ। यो क्षेत्रबाट हुने गल्तीले राष्ट्र र जनतालाई निकै नोक्सान हुने स्थिति छ ।

योग्यता र सीपको कमी पत्रकारिता पेशामा देखिएकै हो । सञ्चारमाध्यममा कार्यरत पत्रकारहरुको योग्यता र सीप विकासको लागि लगानी गर्नुपर्ने बुझाइको अभाव सञ्चारगृहका व्यवस्थापकमा रहेको पाइन्छ । सञ्चारमाध्यमको गुणात्मक विकासको लागि क्षमतावान् पत्रकार हुनु अनिवार्य शर्त हो । तर त्यसतर्फ ध्यान जान नसकेको विडम्वनापूर्ण स्थिति छ । पत्रकारहरुको

पेशागत क्षमता अभिवृद्धिको लागि योजनाबद्ध नीति र कार्यक्रम बनाउन सकिएन भने अयोग्यताको शिकार सञ्चारक्षेत्र हुनेछ । पत्रकारिता व्यवसायबाट जीविकोपार्जन हुने विश्वासको निर्माण अझै हुन सकेको छैन । क्षमतावान पत्रकारहरु पलायन हुँदै जाने र स्थापित सञ्चारमाध्यमहरु बन्द हुने प्रवृतिले पत्रकारिता व्यवसाय सिकारुहरुको मात्र प्रयोगशाला बन्ने खतरा उत्तिकै छ ।

प्रेस काउन्सिल नेपाल सम्पूर्ण सञ्चारमाध्यम र पत्रकारहरुको अभिभावक संस्था हो । सञ्चारमाध्यम र पत्रकारहरुको हक हित र प्रेस स्वतन्त्रताको संरक्षण गर्नु यस संस्थाको घोषित उद्देश्य हो । यो संस्था सञ्चारमाध्यम र पत्रकारको संरक्षणका साथै आचारसंहिताको निर्माण र पालना गराउने नियमनकारी संस्था पनि हो । काउन्सिललाई अभिभावक संस्थाको रुपमा नमान्ने, आचारसंहिताको पालना पनि नगर्ने बढ्दो प्रवृत्ति निकै चिन्ताको विषय बन्दै गएको छ । आचारसंहिताको उल्लंघन गर्नु पुरुषार्थ र पालना गर्नुलाई कमजोरीको रुपमा बुझ्ने मनोविज्ञान पनि सञ्चारक्षेत्रमा समस्याको रुपमा देखा परेका छन् । कडाई गर्दा प्रेस स्वतन्त्रता सेन्सरशीपमा पर्न जाने खतरा र नगर्दा अराजकता झन बढ्ने स्थितिबीच सन्तुलन कायम गर्दै अनुशासित र जिम्मेवार पत्रकारिता कसरी बनाउने भन्ने गम्भीर प्रश्न पनि प्रेस काउन्सिलको अगाडि छ ।

छापा माध्यम, टि.भी. र रेडियोले नेपाली सञ्चारमाध्यममा भूमिका निभाउँदै आएकोमा अहिले अनलाइन सञ्चारमाध्यम पनि थपिएको छ । यी सञ्चारमाध्यमले उस्तै उस्तै समाचार सामाग्री प्रस्तुत गरिरहेका छन् । कुन प्रकृतिका सञ्चारमाध्यमले कुन प्रकृतिका सामाग्री प्रस्तुत गर्दा पाठक र स्रोताको चाख अनुकूल हुन्छ भन्ने विषयमा पनि अध्ययन र अनुसन्धान हुन आवश्यक छ, जसबाट सवै सञ्चारमाध्यम दिगो र टिकाउ हुने स्थिति रहन्छ । सञ्चारमाध्यमसँग सम्बन्धित कानूनहरु पनि समयानुकुल नभएको कारणले पनि समस्या उत्पन्न भएको छ । सञ्चार नीति र कानूनहरु समायानुकूल एवं सञ्चारमैत्री बनाउनेतर्फ चाँडोभन्दा चाँडो उपयुक्त व्यवस्था गर्नु आवश्यक छ । सञ्चार जगतका समस्याहरु समाधान गर्न र यस क्षेत्रमा भएका उपलब्धीहरुलाई संरक्षण र सम्बर्द्धन गर्दै प्रभावकारी बनाउन प्रेस काउन्सिल नेपाल प्रयत्नशील छ । यसको लागि सवैको सहयोगको अपेक्षा राखिन्छ ।

छोटो समयमा उल्लेखनीय विकास भएको नेपाली सञ्चारमाध्यम र पत्रकारिताले राष्ट्र र जनतालाई बाटो देखाउने उदाहरणीय भूमिका निभाएको छ । यस क्षेत्रमा देखा परेका विकृति र विसंगतिलाई हटाउँदै सकारात्मक उपलब्धीहरुको साथ अघि बढ्न सकियो भने सञ्चार जगतको आशालाग्दो क्षेत्र निश्चित रुपमा हुनेछ । राजनीतिक क्षेत्रका उपलब्धीहरुलाई समयमा नै संस्थागत गर्न नसक्दा राजनीतिप्रतिको जनविश्वासमा जसरी दिन प्रतिदिन ह्रास आउँदै छ, त्यस्तै स्थिति सञ्चार जगतले पनि भोग्नु पर्ने खतरा पनि छ । यसतर्फ सञ्चार क्षेत्रका सवैको ध्यान जाओस् भन्ने प्रेस काउन्सिलको ४५ औं वार्षिक उत्सवको उपलक्ष्यमा अनुरोध गर्दछु । साथै यो प्रतिवेदन तयार गर्न मेहनत गर्नु हुने प्रेस काउन्सिलका सदस्य तथा कर्मचारीहरुलाई धन्यवाद दिन चाहन्छु ।

वोर्णबहादुर कार्की
अध्यक्ष
प्रेस काउन्सिल नेपाल
२०७१ असोज ६ गते

# नेपाली प्रेसका प्रवृत्ति, चुनौती र अवसर

विचार र अभिव्यक्तिको स्वतन्त्रता लोकतन्त्रको आधारभूत शर्त हो । यस सन्दर्भमा महान फ्रान्सेली दार्शनिक एवं लेखक भोल्तेयर (सन् १६९४-१७७८) को एउटा उक्ति निकै चर्चित छ–'तपाईंको विचारप्रति त म सहमत हुन सक्तिन । तर, तपाईंको बोल्न पाउने स्वतन्त्रताका लागि म मृत्युपर्यन्त लडिरहने छु।' सामान्य अर्थमा भन्दा भोल्तेयरले भने झैं विचार र अभिव्यक्ति स्वतन्त्रताको अन्तर्य भनेको असहमत विचार राख्न पाउने र त्यस्तो विचार राखेकै कारण असुरक्षित हुनु नपर्ने अवस्था हो । संयुक्त राष्ट्रसंघको साधारणसभाद्वारा सन् १९४८ डिसेम्बर १० मा पारित मानव अधिकारको विश्वव्यापी घोषणापत्रको धारा १९ ले प्रत्येक व्यक्तिलाई विचार तथा अभिव्यक्तिको स्वतन्त्रता हुनेछ, यो अधिकारअन्तर्गत प्रत्येक व्यक्तिलाई बिना हस्तक्षेप विचार अभिव्यक्त गर्ने, आफूले चाहेको सूचना माग्ने, प्राप्त गर्ने तथा त्यस्तो सूचना एवं विचार कुनै पनि माध्यमद्वारा बिनाबन्देज प्रसार गर्ने स्वतन्त्रता हुनेछ भनी उल्लेख गरेको छ ।

## संवैधानिक व्यवस्थाः

नेपालको अन्तरिम संविधान २०६३ ले मौलिक हकअन्तर्गत प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको प्रत्याभूत गरेको छ । संविधानको धारा १२ मा स्वतन्त्रताको हक; धारा १५ मा प्रकाशन, प्रसारण तथा छापाखानासम्बन्धी हक र धारा २७ मा सूचनाको हकको व्यवस्था छ । योसँगै प्रेस स्वतन्त्रताको व्यवस्था प्रत्यक्षरूपमा आकर्षित हुने संविधानका अन्य व्यवस्थाहरूमा धारा २८ गोपनीयताको हक; धारा ५६(१) व्यवस्थापिका-संसद्को विशेषाधिकारअन्तर्गत पूर्ण वाक्स्वतन्त्रता; धारा १०२(३) अदालतको अवहेलनामा कारवाही चलाउन सकिने; धारा १४३(७) संकटकालीन अधिकार प्रयोग हुँदा मौलिक हक निलम्बन हुनसक्ने लगायतका प्रावधान छन् ।

## प्रस्तावित प्रावधानः

मुलुक अहिले दोस्रो संविधानसभाबाट नयाँ संविधान निर्माणको प्रक्रियामा छ । अघिल्लो संविधानसभाले प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको सन्दर्भमा सहमति गरेका व्यवस्था अन्तरिम संविधानभन्दा खासै फराकिलो छैन । वर्तमान संविधानसभाले स्वामित्व ग्रहण गरेको सहमतिको उक्त मस्यौदा प्रतिवेदनमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको सन्दर्भमा स्वतन्त्रताको हक, आमसञ्चारसम्बन्धी हक, सूचनाको हक र गोपनीयताको हकको छुट्टाछुट्टै उल्लेख गरिएको छ । स्वतन्त्रताको हकमा 'कानुनबमोजिमबाहेक कुनै पनि व्यक्तिको वैयक्तिक स्वतन्त्रता अपहरण हुने छैन' र 'प्रत्येक नागरिकलाई देहायको स्वतन्त्रता हुनेछ' भनी सोअन्तर्गत 'विचार र अभिव्यक्तिको

स्वतन्त्रता' उल्लेख गरिएको छ । सोको प्रतिबन्धात्मक वाक्यांशमा 'तर, सोको कुनै कुराले नेपालको राष्ट्रियता, सार्वभौमसत्ता, स्वाधीनता र अखण्डतामा खलल पर्ने वा संघीय इकाइबीचको सुसम्बन्धमा खलल पर्ने कार्य वा विभिन्न जात, जाति, धर्म, सम्प्रदायबीचको सुसम्बन्धमा खलल पर्ने वा जातीय भेदभाव वा छुवाछुतलाई दुरुत्साहन गर्ने कार्य वा गालीबेइज्जती, अदालतको अवहेलना हुने वा अपराधको दुरुत्साहन गर्ने वा सार्वजनिक शिष्टाचार, नैतिकता प्रतिकूल हुने कार्यमा मनासिब प्रतिबन्ध लगाउने गरी ऐन बनाउन रोक लगाएको मानिने छैन' भनिएको छ ।

त्यस्तै आमसञ्चारसम्बन्धी हक अन्तर्गत यस्तो व्यवस्था राखिएको छ–

'(१) विद्युतीय प्रकाशन, प्रसारण तथा छापालगायतका अन्य जुनसुकै माध्यमबाट कुनै समाचार, सम्पादकीय, लेख, रचना वा अन्य कुनै पाठ्य, श्रव्य, श्रव्यदृश्य सामग्रीको प्रकाशन तथा प्रसारण गर्न वा सूचना प्रवाह गर्न वा छाप्न पूर्वप्रतिबन्ध लगाइने छैन । तर नेपालको राष्ट्रियता, सार्वभौमसत्ता वा अखण्डता वा संघीय इकाइबीचको सुसम्बन्धमा खलल पर्ने वा विभिन्न जात, जाति वा सम्प्रदायबीचको सुसम्बन्धमा खलल पर्ने, राज्यद्रोह, झुटो सामग्री प्रकाशन वा प्रसारणद्वारा व्यक्तिको सामाजिक मर्यादामा आँच पुऱ्याउने वा अदालतको अवहेलना हुने वा अपराध गर्न दुरुत्साहन गर्ने वा सार्वजनिक शिष्टाचार, नैतिकता प्रतिकूल र छुवाछुत एवं जातीय तथा लैङ्गिक भेदभावलाई दुरुत्साहन गर्ने कार्यमा मनासिव प्रतिबन्ध लगाउने गरी कानुन बनाउन रोक लगाएको मानिने छैन ।

(२) कुनै श्रव्य, श्रव्यदृश्य वा विद्युतीय उपकरणको माध्यमबाट कुनै सामग्रीको प्रकाशन वा प्रसारण गरे वा छापे बापत त्यस्तो सामग्री प्रकाशन तथा प्रसारण गर्ने वा छाप्ने, रेडियो, टेलिभिजन, अनलाइन वा अन्य कुनै किसिमको डिजिटल वा विद्युतीय, छापा वा अन्य सञ्चारमाध्यमलाई बन्द, जफत वा दर्ता खारेज गरिने छैन' भनिएको छ भने पत्रपत्रिका र छापाखानाको हकमा 'कुनै समाचार, लेख, सम्पादकीय, रचना, सूचना वा अन्य कुनै सामग्री मुद्रण वा प्रकाशन गरेबापत कुनै समाचारपत्र, पत्रिका वा छापाखाना बन्द, जफत वा दर्ता खारेज गरिने छैन ।' भनिएको छ ।

(३) कुनै समाचार, लेख, सम्पादकीय, रचना, सूचना वा अन्य कुनै सामग्री मुद्रण वा प्रकाशन गरे बापत कुनै समाचारपत्र, पत्रिका वा छापाखाना बन्द, जफत वा दर्ता खारेज गरिने छैन । त्यस्तो कार्य कानुनबमोजिम दण्डनीय हुनेछ र त्यस्तो कार्यबाट पीडित व्यक्तिलाई उचित क्षतिपूर्ति पाउने हक हुनेछ ।

(४) कानुनबमोजिम बाहेक कुनै छापा, विद्युतीय प्रसारण तथा टेलिफोनलगायतका सञ्चार साधनलाई अवरुद्ध गरिने छैन ।'

सूचनाको हकमा 'प्रत्येक नागरिकलाई आफ्नो वा सार्वजनिक सरोकारको कुनै पनि विषयको सूचना माग्ने र प्राप्त गर्ने हक हुनेछ । तर कानुनद्वारा गोप्य राख्नुपर्ने सूचनाको जानकारी

दिन कसैलाई कर लगाएको मानिने छैन ।' भन्ने उल्लेख छ भने गोपनीयताको हकमा 'कुनै पनि व्यक्तिको जीउ, आवास, लिखत, तथ्यांक, पत्राचार, चरित्रसम्बन्धी कुराहरूको गोपनीयता कानुनद्वारा तोकिएको अवस्थामा बाहेक अनतिक्रम्य हुनेछ' भनिएको छ ।

## सञ्चारसम्बन्धी ऐन–नियमहरू:

प्रेस स्वतन्त्रतालाई प्रवर्धन, अनुगमन र बन्देजका व्यवस्थाका लागि विभिन्न ऐन नियमहरूको तर्जुमा भएको पाइन्छ । यस सन्दर्भमा नेपालमा प्रेससम्बन्धी व्यवस्थाकै लागि जारी भई हाल लागु भैरहेका प्रमुख ऐन नियमहरूमा रेडियो ऐन २०१४ र रेडियो सञ्चार (लाइसेन्स) नियमावली २०४९, छापाखाना तथा प्रकाशनसम्बन्धी ऐन २०४८ र नियमावली २०४९, प्रेस काउन्सिल ऐन २०४८ र नियमावली २०४९, राष्ट्रिय प्रसारण ऐन २०४९ र नियमावली २०५२, श्रमजीवी पत्रकारसम्बन्धी ऐन २०५१ र नियमावली २०५३, सूचनाको हकसम्बन्धी ऐन २०६४ र नियमावली २०६५ तथा विद्युतीय (इलेक्ट्रोनिक) कारोबारसम्बन्धी ऐन २०६३ रहेका छन् ।

त्यस्तै सरकारी सञ्चारमाध्यम सञ्चालनसम्बन्धी संस्थागत ऐनहरू जस्तै राष्ट्रिय समाचार समिति ऐन २०१९, गोरखापत्र संस्थान ऐन २०१९, सञ्चार संस्थान ऐन २०२८, रेडियो प्रसार सेवा विकास समिति (गठन आदेश) २०४१ र नेपाल टेलिभिजन संस्थान सञ्चालनसम्बन्धी आदेश २०४३ रहेका छन् । यसैगरी अन्य व्यवस्थासहित जारी भई प्रेसका सन्दर्भमा पनि प्रत्यक्ष परोक्षरूपमा जोडिएका अन्य ऐन नियमहरूमा नागरिक अधिकार ऐन २०१२, तथ्यांक ऐन २०१५, गालीबेइज्जती ऐन २०१६, जासुसी ऐन २०१८, हुलाक ऐन २०१९, हातहतियार तथा खरखजना ऐन २०१९, चलचित्र (निर्माण, प्रदर्शन तथा वितरण) ऐन २०२६, केही सार्वजनिक (अपराध र सजाय) ऐन २०२७, लिखतहरूको गोप्यतासम्बन्धी ऐन २०३९, राज्यविरुद्धको (अपराध र सजाय) ऐन २०४६, बालबालिका सम्बन्धी ऐन २०४८, निजामती सेवा ऐन २०४९, नेपाल राष्ट्र बैंक ऐन २०५८, विदेशी विनिमय ऐन २०५९, प्रतिलिपि अधिकार ऐन २०५९, बैंक तथा वित्तीय संस्थासम्बन्धी ऐन २०६३ लगायत रहेका छन् ।

## सञ्चारमाध्यमको वर्तमान अवस्था:

नेपाली पत्रकारिताको जगमा पहिलो इँटा मोतीराम भट्टले वि.सं. १९४३ सालमा 'गोरखा भारत जीवन' नामक मासिक पत्रिका काशीमा छापेर हालेका थिए भने नेपाली भूमिमा पहिलो पटक पत्रकारिताको श्री गणेश मोतिरामले नै वि.सं. १९५५ मा 'सुधा सागर' को प्रकाशनसँगै गरेका थिए । नेपालको पहिलो समाचारपत्रको रूपमा संवत् १९५८ वैशाख २४ गते सोमबारबाट गोरखापत्र (तात्कालिक गोर्खापत्र) को प्रकाशन भएको थियो । २००७ सालमा प्रजातन्त्रको स्थापनासँगै स्वतन्त्र पत्रकारिताको विरुवा रोपियो, जुन आज झाँगिएर विशाल वृक्ष बनेको छ ।

अहिलेसम्ममा दर्ता भएका पत्रपत्रिकाको संख्या हेर्दा आश्चर्य लाग्दो देखिन्छ । सूचना विभागको अभिलेख अनुसार, २०७१ असार मसान्तसम्ममा दर्ता भएका, समाचारमूलक (दैनिक, अर्धसाप्ताहिक, साप्ताहिक र पाक्षिक) पत्रपत्रिकाको संख्या ३६६९ रहेको छ भने प्रेस काउन्सिलको

अभिलेखमा हालसम्म दर्ता भएका पत्रपत्रिकाको संख्या ३७१२ रहेको देखिन्छ। सूचना तथा सञ्चार मन्त्रालयका अनुसार अहिले नेपालमा इजाजत प्राप्त गरेका एफएमको संख्या ५४३ पुगेको छ । ती मध्ये सञ्चालनमा रहेका एफएमहरूको संख्या ३६० रहेको छ । त्यस्तै हाल इजाजत प्राप्त गरेका टेलिभिजनहरूको संख्या ७५ पुगेको छ । चार दशकभन्दा बढी अवधिसम्म समाचार एजेन्सीका रूपमा रासस मात्र रह्यो । अहिले सूचना तथा सञ्चार मन्त्रालयमा निजी क्षेत्रबाट ४ वटा समाचार एजेन्सी दर्ता भई सञ्चालनको प्रयासमा छन् भने समाचारमूलक कार्यक्रम उत्पादन वा वितरण गर्ने वा श्रव्य वा श्रव्यदृश्य सामग्री उत्पादन वा प्रसारणगृहको संख्या पनि बढिरहेको छ । नेपालभित्रबाट सन् १९९९ बाट नेपाल न्युज डट कमले संस्थागत रूपमै अनलाइन पत्रकारिता थालेपछि अघि बढेको डिजिटल पत्रकारिता पनि निकै झाँगिसकेको छ । अनलाइन पत्रकारिता गरिरहेको भनेर प्रेस काउन्सिलमा अभिलेख गराउन आउने समाचारमूलक अनलाइनको संख्या ११६ पुगेको छ। नेपाल बाहिरबाट नेपाली नागरिकले नेपाल र नेपालीलाई नै लक्षित गरी सञ्चालन भैरहेका अनलाइनको संख्या पनि प्रशस्त छ। २०७१ साउन मसान्तसम्ममा सूचना विभागमा प्रेस पासका लागि आवेदन गर्ने समाचार अनलाइनको संख्या ५० छ ।

यत्तिका संख्यामा सञ्चारमाध्यमको विस्तार हुनु सकारात्मक मान्नुपर्दछ । तर, तिनको स्वामित्व, सञ्चालन प्रक्रिया, तिनले समेट्ने विषयवस्तु र कार्य वातावरण अवलोकन गर्ने हो भने स्थिति निकै कहालीलाग्दो छ ।

## लोकतन्त्र, प्रेस स्वतन्त्रता र सामाजिक उत्तरदायित्वः

अब्राहम लिंकनको परिभाषामा लोकतन्त्र भनेको जनताले, जनताका लागि गरिने जनताको शासन हो। लोकतन्त्रले प्रत्येक व्यक्तिलाई बोल्ने, आलोचना गर्ने र अरूप्रति असहमति जनाउने अनुमति प्रदान गर्दछ। यो दलीय स्वतन्त्रता मात्र हैन, विचार र अभिव्यक्ति स्वतन्त्रताको आधार पनि हो। विचार र अभिव्यक्ति स्वतन्त्रताको प्रतिविम्ब भनेको प्रेस स्वतन्त्रता नै हो। प्रेस स्वतन्त्रताको अधिकारसँगै स्वतन्त्र प्रेसको दायित्व पनि निश्चित गरिएको छ । सामाजिक उत्तरदायित्वको सिद्धान्तले मिडिया समाजप्रति उत्तरदायित्व हुनुपर्छ र मिडियाको स्वामित्व सार्वजनिक दायित्व हो भन्ने मान्यता राख्दछ । यो सिद्धान्तले सञ्चारमाध्यम सत्यतथ्यपरक, निष्पक्ष, विषयपरक र सान्दर्भिक हुनुपर्छ भन्ने विश्वास राख्दछ। मिडिया स्वतन्त्र हुनुपर्छ, तर स्वनियमनको आवश्यकता रहन्छ भन्ने मान्यता राख्ने सामाजिक उत्तरदायित्वको सिद्धान्तले भन्छ– मिडियाले स्वीकृत आचारसंहिता र व्यावसायिक आचरण पालना गर्नुपर्दछ।

## पत्रकार आचारसंहिताः

सामाजिक उत्तरदायित्वको पालनाका लागि पत्रकार आचारसंहिताको पालना महत्वपूर्ण पक्षका रूपमा रहेको हुन्छ, जसले व्यावसायिक पत्रकारिताको प्रवर्द्धन गर्न मद्दत पुऱ्याउँछ । पत्रकार आचारसंहिता भनेको स्वनियमन प्रणाली हो । यसले स्वतन्त्र र निष्पक्ष हुने पत्रकारको अधिकारको रक्षा गर्छ र उसको व्यावसायिक त्रुटिको परीक्षण पनि कुनै अधिकारी या शक्तिशाली

व्यक्ति या निकायबाट नभई उसको मित्रबाटै हुने अवस्था बनाउँछ । यसको उद्देश्य शुद्धता र व्यावसायिक आचारको न्यूनतम मापदण्ड निर्धारण, गोपनीयता र अन्य व्यक्तिगत अधिकारको रक्षा एवं सम्पादकीय स्वतन्त्रता, अभिव्यक्ति स्वतन्त्रता एवं आस्था र विचारको विविधताको संरक्षण गर्नु हो ।

अनुशासित पत्रकारिताको एक प्रमुख आधारसमेत मानिने आचारसंहिताको मुख्य उद्देश्य सत्यको संप्रेषण, स्वतन्त्रता र स्वाधीनताको सम्मान, मानवताको व्यवहार र सामाजिक हितको प्रवर्धनजस्ता व्यवस्थाको परिपालन गराउनु हो भन्ने मत पाइन्छ । पत्रकारितालाई पीत पत्रकारिताबाट जोगाएर स्वच्छ र मर्यादित बनाउनका लागि पत्रकार आचारसंहिताको जन्म भएको हो । स्वीडेनले सर्वप्रथम सन् १८७४ मा प्रेस क्लबको गठन गरी आचारसंहिताको निर्माण र त्यसको उल्लंघन गर्नेका विरुद्ध उजुरी सुनी कारवाही गर्न प्रारम्भ गरेदेखि अहिलेसम्म आइपुग्दा विश्वभरि नै पत्रकार आचारसंहिता जारी गर्ने र त्यसको अनुगमन गर्ने प्रचलनले व्यापकता लिएको पाइन्छ । नेपालमा प्रजातन्त्रको उदयपछि देशमा स्वच्छ पत्रकारिताको विकासका लागि राय सुझाव पेस गर्न भनेर २०१४ सालमा गठन गरिएको प्रेस कमिसनले २०१५ सालमा पेस गरेको प्रतिवेदनमा पत्रकारले पालना गर्नुपर्ने आचरणका १८ बुँदे नियमहरू प्रस्ताव गर्‍यो, जसलाई आचारसंहिताको प्रारम्भबिन्दु मान्न सकिन्छ । त्यही प्रतिवेदनमा प्रेस सल्लाहकार समितिको प्रस्ताव गरिएअनुरूप २०२४ सालमा प्रेस सल्लाहकार समिति र त्यसैको निरन्तरतास्वरूप २०२७ सालमा प्रेस काउन्सिल गठन भयो । यसपछि २०२५, २०३३, २०४०, २०४७, २०४९, २०५५ र २०६० सालमा आचारसंहिता तयार पारेको र तिनमा समय समयमा संशोधन भएको पाइन्छ । प्रेस काउन्सिल नेपालले नेपाल पत्रकार महासंघको सहमतिमा हाल कार्यान्वयनमा ल्याएको पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) ले मूलभूतरूपमा अन्तर्राष्ट्रिय सिद्धान्तलाई आत्मसात् गर्दै पत्रकार र सञ्चारमाध्यमले गर्न हुने र गर्न नहुने कार्यसम्बन्धी मान्यता अघि सारेको छ । दफा ३ मा रहेको पत्रकार तथा आमसञ्चारमाध्यमले निर्वाह गर्नुपर्ने ११ बुँदा र दफा ४ मा गर्न नहुने १४ बुँदा तोकिएको छ । काउन्सिलले यसको पालनाका लागि पत्रकार र सञ्चारमाध्यमहरूलाई प्रोत्साहित गर्ने र उल्लंघन भएको अवस्थामा कारवाही गर्ने प्रक्रिया जारी राखेको छ । यद्यपि यसको पालनाको अवस्था अझै सन्तोषजनक हुन सकेको छैन । यसर्थ काउन्सिलले नेपाल पत्रकार महासंघसँग सहकार्य गर्दै देशव्यापीरूपमा पत्रकार आचारसंहितासम्बन्धी जागरण अभियान सञ्चालन गर्ने नीति अख्तियार गरी अभियान सञ्चालनको तयारी गरिरहेको छ

## प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका चुनौती र अवसरः

नेपालमा लोकतन्त्र स्थापनापछि पनि प्रेस स्वतन्त्रता र समग्रमा विचार तथा अभिव्यक्ति स्वतन्त्रताको अवस्था  सन्तोषजनक रहन सकेको छैन । यसका सामुन्ने अनेका चुनौतीहरू अहिले पनि कायमै छन् । सरकारले संसदमा दर्ता गराएको अदालतको अवहेलना सम्बन्धी विधेयकले विचार तथा अभिव्यक्ति स्वतन्त्रतालाई संकुचित गर्ने निष्कर्षका साथ नेपाल पत्रकार महासंघसहित

नेपाली मिडिया जगत त्यसको विरोधमा उत्रियो। अहिले यो विधेयक नेपालको संसदीय इतिहासमै पहिलो अभ्यास गर्दै जनताको रायका लागि गएको छ। यो प्रक्रिया आफैमा जटिल र जोखिमपूर्ण रहेको छ। यसलाई मिडिया जगत मात्र हैन, विचार र अभिव्यक्ति स्वतन्त्रताका पक्षधर सबैले सही निष्कर्षमा पुऱ्याउन सचेततापूर्वक क्रियाशील हुनुपर्ने खाँचो छ।

अभिव्यक्ति स्वतन्त्रतालाई नियन्त्रण गर्ने कठोर कानुनको रूपमा विद्युतीय कारोवारसम्बन्धी ऐन को प्रयोग भैरहेको अनुभूति मिडिया जगतले गरेको छ। यसलाई संशोधन गरी प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतामैत्री बनाउन आवश्यक रहेको महसुस भैरहेको छ। सञ्चारमाध्यममा सम्पादकीय स्वतन्त्रता संकटमा पर्दै गएको छ भने सार्वजनिक सूचनामा नागरिकको पहुँच र सञ्चारमाध्यममार्फत् यसको पूर्ण उपभोगको वातावरण बनाउन संस्थागत सुधार र सूचना संस्कृतिको निर्माणका लागि थुप्रै कामहरू हुन जरूरी छ। प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको उपभोग गर्दा व्यक्तिको गोपनीयताको हकको संरक्षणको साथै मानहानि, राष्ट्रिय सुरक्षा, अदालतको अवहेलना, घृणायुक्त अभिव्यक्ति, असत्य समाचार, धार्मिक दुष्प्रचार, यौनजन्य अश्लीलता वा उच्छृङ्खलता जस्ता विषयमा पनि सञ्चारमाध्यम अझ संवेदनशील हुनुपर्ने खाँचो छ। नयाँ मिडियाको विकास र विस्तारसँगै यसका अवसरको उपयोग र चुनौतीको सामनाका लागि अव परम्परागत व्यवस्था र अभ्यासले मात्र पुग्दैन। २०६२/६३ को परिवर्तनपछिको अवस्था र मिडियाको पछिल्लो विकासलाई संवोधन गर्ने गरी नयाँ मिडिया नीतिको निर्माण गर्न जरूरी छ। नयाँ संविधानमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतालाई अन्तर्राष्ट्रिय अभ्यास र लोकतन्त्रको फराकिलो मान्यताअनुरूप स्थापित गर्नुपर्ने खाँचो छ। परिवर्तित परिवेशअनुरूप मिडिया कानुनको पुनरावलोकन गरी मिडियाको छाता कानुन बनाउन आवश्यक छ भने प्रेस काउन्सिललगायतका संस्थाहरूको स्वायत्तता, सवलीकरण र पुनर्संरचना अति आवश्यक छ।

यस्तै व्यावसायिक पत्रकारिताको विकासका लागि सञ्चार प्रतिष्ठानमा कार्यरत श्रमजीवी पत्रकार, कर्ममचारी र कामदारको अवस्थामा सुधार हुन पनि उत्तिकै आवश्यक छ। यसको निम्ति श्रमजीवी पत्रकार ऐनको कार्यान्वयनमा तदारुकता देखाउनै पर्दछ। पत्रकारको भौतिक सुरक्षा र दण्डहिनताको अन्त्य अर्को महत्वपूर्ण पक्ष हो। पत्रकारको दक्षता अभिवृद्धिका लागि विशेष कार्यक्रमको सञ्चालन र संस्थागत विकासको पहल गर्नुपर्ने खाँचो छ। व्यावसायिक पत्रकारिताको विकासका लागि समग्र मिडिया क्षेत्रको प्रवर्द्धनतर्फ पनि उत्तिकै ध्यान जान आवश्यक छ। मिडियामा बहुलता, विविधता, लैंगिक समानता र समावेशिताको अवधारणालाई मूर्तता दिन पनि सरकारी र निजी दुवै क्षेत्रले गम्भीर हुन आवश्यक छ।

पत्रकारितालाई राज्यको चौथो अंगको रूपमा लिइन्छ। यस अनुरूप राज्यले पत्रकारिता क्षेत्रलाई प्राथमिकता दिन र पत्रकारिता जगत्ले पनि त्यो दायित्वलाई पालना गर्न विगतका भूमिकाको समीक्षा गर्दै अव नयाँ सोचका साथ अघि बढ्न आवश्यक छ। यसका निम्ति नयाँ संविधान कोशेढुङ्गा सावित हुन सक्दछ, जसको प्रक्रिया र अन्तर्वस्तुमा प्रेस जगतले निरन्तर निगरानी राख्न भने जरूरी छ।

## परिच्छेद एक

# समिति तथा उपसमितिहरु

प्रेस काउन्सिल ऐन र विनियमावलीबाट व्यवस्थित समिति उपसमिति र त्यसमा प्रतिनिधित्व गर्ने पदाधिकारीहरुको विवरण निम्नानुसार रहेको छ :

### क. वितरण सम्परीक्षण समितिः

| | | |
|---|---|---|
| १. | श्री लक्ष्मीविलास कोइराला, महानिर्देशक सूचना विभाग | अध्यक्ष |
| २. | श्री यदुप्रसाद पन्थी, प्रतिनिधि, सञ्चार मन्त्रालय | सदस्य |
| ३. | श्री मनऋषि धिताल, प्रतिनिधि, प्रेस काउन्सिल नेपाल | सदस्य |
| ४. | श्री मदन कुमार निरौला, प्रतिनिधि, नेपाल चार्टर्ड एकाउन्टेन्ट्स् संस्था | सदस्य |
| ५. | श्री रुद्रप्रसाद भट्टराई, प्रतिनिधि, नेपाल विज्ञापन एजेन्सी संघ | सदस्य |
| ६. | श्री निर्मलकुमार पौडेल, प्रतिनिधि, नेपाल चेम्बर अफ कमर्स | सदस्य |
| ७. | आमन्त्रित डा. श्री महेन्द्र विष्ट, श्री मुरलीप्रसाद यादव, श्री सुदर्शन आचार्य | आमन्त्रित |
| ८. | मुख्य अधिकृत श्री झविन्द्र भुसाल | सचिव |

### ख. प्रेस काउन्सिल गोपालदास पत्रकारिता पुरस्कार समितिः

| | | |
|---|---|---|
| १. | श्री वोर्णबहादुर कार्की | अध्यक्ष |
| २. | श्री महेन्द्र विष्ट, अध्यक्ष नेपाल पत्रकार महासंघ | सदस्य |
| ३. | श्री चन्द्रकिशोर झा, प्रतिनिधि, प्रेस काउन्सिल | सदस्य |
| ४. | श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ५. | श्री रामकृष्ण रेग्मी | सदस्य |
| ६. | प्रशासन प्रमुख, श्री झबिन्द्र भुसाल | सदस्य |

**क. पदपूर्ति समितिः**

| | | |
|---|---|---|
| १ | श्री वोर्णबहादुर कार्की | अध्यक्ष |
| २ | श्री लक्ष्मीविलास कोइराला | विज्ञ सदस्य |
| ३ | श्री यदुप्रसाद पन्थी /नारायणप्रसाद अधिकारी सूचना तथा सञ्चार मन्त्रालयको प्रतिनिधि | सदस्य |
| ४ | श्री झविन्द्र भुसाल, मुख्य अधिकृत | सचिव |

**ग. मिडिया विकास कोष उपसमितिः**

| | | |
|---|---|---|
| १. | अध्यक्ष, प्रेस काउन्सिल, श्री वोर्णबहादुर कार्की | अध्यक्ष |
| २. | अध्यक्ष, नेपाल पत्रकार महासंघ, श्री महेन्द्र विष्ट | सदस्य |
| ३. | सदस्य सचिव, प्रेस काउन्सिल, श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ४. | प्रतिनिधि, हिमालयन बैंक, श्री उज्वल राजभण्डारी | सदस्य |
| ५. | प्रतिनिधि, नेपाल प्रेस इन्स्टिच्युट, श्री चिरन्जीवी खनाल | सदस्य |
| ६. | मुख्य अधिकृत श्री झविन्द्र भुसाल | सदस्य सचिव |

**उप–समितिहरुः**

प्रेस काउन्सिल ऐन २०४८ को दफा ९ मा काउन्सिलले आफ्नो कार्य सुचारु रुपले संचालन गर्नका लागि उपसमिति गठन गर्न सक्ने व्यवस्था गरिएको छ। सो व्यवस्थाबमोजिम काउन्सिलले देहायका उपसमिति गठन गरी कार्य सम्पन्न गर्दै आएको छ । उपसमितिमा प्रतिनिधित्व हुने पदाधिकारी र कार्यक्षेत्रको विवरण निम्नानुसार रहेको छ :

| **क. आचारसंहिता अनुगमन उपसमितिः** | | |
|---|---|---|
| १. | श्री वोर्णबहादुर कार्की | संयोजक |
| २. | डा. श्री महेन्द्र विष्ट | सदस्य |
| ३. | श्री किशोर श्रेष्ठ | सदस्य |
| ४. | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ५ | श्री चन्द्रकिशोर झा | सदस्य |

| | | |
|---|---|---|
| ६ | श्री मनऋषि धिताल | सदस्य |
| ७. | श्री सुदर्शन आचार्य | सदस्य |
| ८ | प्रतिनिधि नेपाल बार एशोसियशन, श्री मोहन इङ्नाम | सदस्य |

**कार्यक्षेत्र :**

१. पत्रकार आचारसंहिताको प्रभावकारी कार्यान्वयन सुनिश्चित गर्ने ।

| **ख. अन्तर्राष्ट्रिय सम्बन्ध एवं प्रकाशन तथा अनुसन्धान उप-समितिः** | | |
|---|---|---|
| १. | श्री किशोर श्रेष्ठ | संयोजक |
| २. | डा.श्री महेन्द्र विष्ट | सदस्य |
| ३. | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ४. | श्री माधव शर्मा | सदस्य |
| ५. | श्री मनऋषि धिताल | सदस्य |
| ६. | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ७. | श्री सुदर्शन आचार्य | सदस्य |
| ८. | श्री जगदीशप्रसाद पौडेल | सचिव |

**कार्यक्षेत्र :**

१. काउन्सिलको तर्फबाट प्रकाशित हुने बुलेटिन, जर्नल, वार्षिक प्रतिवेदन तथा अनुसन्धानमूलक पुस्तकसमेत सवै प्रकाशनहरुको संयोजन र व्यवस्थापन गर्ने ।

२. अन्तर्राष्ट्रिय सम्बन्ध विकास एवं विस्तारसम्बन्धी कार्य गर्ने ।

| **ग. ऐन, नियम पुनरावलोकन उपसमितिः** | | |
|---|---|---|
| १. | श्री मुरलीप्रसाद यादव | संयोजक |
| २ | डा. श्री महेन्द्र विष्ट | सदस्य |
| ३ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ४ | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ५ | श्री नवलकिशोर यादव | सदस्य |

| | | |
|---|---|---|
| ६ | श्री मनऋषि धिताल | सदस्य |
| ७ | श्री सुदर्शन आचार्य | सदस्य |
| ८ | श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ९. | श्री अध्यक्ष, प्रेस काउन्सिल नेपाल कर्मचारी संघ | सदस्य |

**कार्यक्षेत्रः**

१. आवश्यकताअनुसार प्रेस काउन्सिल ऐन, नियम, विनियमावली आदिलाई पुनरावलोकन तथा परिमार्जन गर्ने ।

| **घ. विकास, योजना तथा प्रशासन सुधार उपसमितिः** | | |
|---|---|---|
| १. | डा.श्री महेन्द्र विष्ट | संयोजक |
| २. | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ३. | श्री चन्द्रदेव कामती | सदस्य |
| ४. | श्री नवलकिशोर यादव | सदस्य |
| ५. | श्री मनऋषि धिताल | सदस्य |
| ६. | श्री माधव शर्मा | सदस्य |
| ७. | | सचिव |

**कार्यक्षेत्र :**

१. काउन्सिलको उद्देश्य परिपूर्तिका निम्ति आवश्यक योजना तथा कार्यक्रमहरु पहिचान गरी व्यवस्थित गर्ने ।

२. योजना तथा कार्यक्रमहरुको निम्ति वार्षिक बजेट तर्जुमा गरी काउन्सिलसमक्ष पेश गर्ने ।

३. प्रशासनिक सुधारसम्बन्धी कार्यहरु गर्ने ।

| ङ. विधागत पत्रकारिता विकास उपसमिति: | | |
|---|---|---|
| १. | श्री माधव शर्मा | संयोजक |
| २ | डा.श्री महेन्द्र विष्ट | सदस्य |
| ३. | श्री किशोर श्रेष्ठ | सदस्य |
| ४ | श्री चन्द्रदेव कामती | सदस्य |
| ५ | श्री नवलकिशोर यादव | सदस्य |
| ६ | श्री मनऋषि धिताल | सदस्य |
| ७ | श्री सुदर्शन आचार्य | सदस्य |
| ८. | | सचिव |

**कार्यक्षेत्र:**

१. साहित्यिक तथा अन्य विधागत पत्रकारिताको विकास र सम्वर्द्धनका लागि आवश्यक नीति निर्माण गरी समस्या समाधानका लागि पहल गर्ने ।

| च. पत्रकार कल्याण कोष उपसमिति: | | |
|---|---|---|
| १. | श्री वोर्णबहादुर कार्की | संयोजक |
| २ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ३ | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ४ | श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ५ | श्री झविन्द्र भुसाल, मुख्य अधिकृत | सदस्य |
| ६. | श्री सुर्यमणी गौतम, प्रतिनिधि नेपाल पत्रकार महासंघ | सदस्य |
| ७ | श्री डा.मुक्तिराम श्रेष्ठ, प्रतिनिधि नेपाल मेडिकल काउन्सिल | सदस्य |
| ८. | | सचिव |

**कार्यक्षेत्र :**

१. स्वास्थ्य उपचार गराउनुपर्ने पत्रकारहरुलाई महासंघको सिफारिसमा ऐन, नियम र प्रकृयाको अधिनमा रही औषधोपचार सुविधा उपलव्ध गराउने ।

| छ. श्रमजीवी पत्रकार उपसमिति: | | |
|---|---|---|
| १. | श्री चन्द्रकिशोर झा | संयोजक |
| २ | श्री नवलकिशोर यादव | सदस्य |
| ३ | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ४ | श्री सुदर्शन आचार्य | सदस्य |
| ५ | श्री उजिर मगर, प्रतिनिधि, नेपाल पत्रकार महासंघ | सदस्य |
| ६. | | सचिव |

**कार्यक्षेत्र:**

१. श्रमजीवी पत्रकारहरुको हकहित प्रवर्द्धनका लागि प्रयत्नशील रहने ।

| ज. न्यू मिडिया विद्युतीय सञ्चार माध्यम उपसमिति: | | |
|---|---|---|
| १. | श्री नवलकिशोर यादव | संयोजक |
| २ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ३ | श्री चन्द्रदेव कामती | सदस्य |
| ४ | श्री मनऋषि धिताल | सदस्य |
| ५ | श्री सुदर्शन आचार्य | सदस्य |
| ६ | | सचिव |

**कार्यक्षेत्र :**

१. विद्युतीय सञ्चार माध्यमको विकास, विस्तार एवं प्रवर्धनका निम्ति अनुसन्धान र पहल गर्ने ।
२. विद्युतीय सञ्चार माध्यमको अनुगमनका निम्ति अध्ययन, अनुसन्धान गरी ठोस सुझाव काउन्सिलसमक्ष प्रस्तुत गर्ने ।
३. काउन्सिलमा सूचना प्रविधिको व्यवस्थापनका लागि आवश्यक पहल गर्ने ।
४. विद्युतीय संचारमाध्यमको वर्गीकरण गर्ने ।

| झ. प्रेस क्लिपिङ सेवा उपसमितिः | | |
|---|---|---|
| १. | श्री मनऋषि धिताल | संयोजक |
| ३ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ४ | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ५ | श्री चन्द्रदेव कामती | सदस्य |
| ६. | श्री झविन्द्र भुसाल | सदस्य |
| ७ | | सचिव |

**कार्यक्षेत्र :**

१. काउन्सिलको वैकल्पिक आम्दानीको स्रोतको रुपमा सञ्चालन भइरहेको प्रेस क्लिपिङ सेवालाई विस्तार गर्न प्रयत्नशील रहने ।

| ञ. मिडिया संवाद तथा बहस उपसमितिः | | |
|---|---|---|
| १. | श्री खिलबहादुर भण्डारी | संयोजक |
| २ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ३. | चन्द्रकिशोर झा | सदस्य |
| ४ | श्री मनऋषि धिताल | सदस्य |
| ५. | श्री माधव शर्मा | सदस्य |
| ६ | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ७. | | सचिव |

**कार्यक्षेत्र :**

१) समसामयिक विषयहरुमा मिडिया सम्वाद सम्वन्धी कार्यक्रम तय गरी वार्षिक कार्यक्रममा समावेश गर्ने ।

२) मिडिया सम्वाद कार्यक्रम संचालन गर्ने ।

| ट. | प्रेस नीति सुझाव तथा परामर्श उपसमितिः | |
|---|---|---|
| १. | श्री सुदर्शन आचार्य | संयोजक |
| २ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ३. | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ४. | श्री चन्द्रकिशोर झा | सदस्य |
| ५ | श्री नवलकिशोर यादव | सदस्य |
| ६. | श्री माधव शर्मा | सदस्य |
| ७. | श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ८. | | सचिव |

**कार्यक्षेत्र :**

१) प्रेस सम्वन्धी नीति/कानुनमा छलफल गरी सुझाव एवम् परामर्श पेश गर्ने र सरोकारवालासंग सम्पर्क स्थापित गर्ने ।

२) प्रेस सम्वन्धी कानुनमा गर्नु पर्ने संशोधन सम्वन्धमा सुझाव पेश गर्ने ।

३) प्रेस सम्वन्धी ऐन, नियम, कानुन र नीतिकाबारेमा छलफल कार्यक्रम संचालन गर्ने।

| ठ. | स्थानीय सञ्चार माध्यम प्रवर्द्धन उप–समितिः | |
|---|---|---|
| १. | श्री चन्द्रदेव कामती | संयोजक |
| २. | श्री महेन्द्र विष्ट | सदस्य |
| ३ | श्री चन्द्रकिशोर झा | सदस्य |
| ४. | श्री नवलकिशोर यादव | सदस्य |
| ५ | श्री माधव शर्मा | सदस्य |
| ६. | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ७. | | सचिव |

**कार्यक्षेत्र :**

१. स्थानीय तथा सानो लगानीमा राष्ट्रिय भाषामा प्रकाशित हुने पत्रपत्रिका, न्यू मिडिया, रेडियोको विकास र सम्वर्द्धनका उपायहरु पहिल्याई लागू गर्न पहल गर्ने।

२. आचारसंहिता उल्लंघनका विषयमा काउन्सिलमा प्राप्त हुने उजुरीहरुको सुनुवाइ गर्ने ।

३. प्रेस जगतलाई समाजप्रति जिम्मेवार र स्वयंममा मर्यादित तुल्याउन सहायक हुने खालका गोष्ठी, सम्वाद र अन्तर्क्रियाहरु आयोजना गर्ने ।

## परिच्छेद २

# पुरस्कारहरु

काउन्सिलले पत्रकारिता क्षेत्रमा योगदान दिने व्यक्ति र संस्थाहरुलाई प्रोत्साहन एवं सम्मान गर्न विभिन्न पुरस्कार स्थापना गरी वार्षिक उत्सवको अवसरमा ती पुरस्कार प्रदान गर्ने गरेको छ। ४४ औं वार्षिकोत्सवको अवसरमा २०७० आश्विन ६ गते विभिन्न विधामा निम्न व्यक्ति/संस्थालाई पुरस्कृत गरिएको थियो ।

| | |
|---|---|
| पुरस्कार : प्रेस काउन्सिल गोपालदास पत्रकारिता पुरस्कार<br>पुरस्कृत व्यक्ति : श्री देवेन्द्र गौतम | पुरस्कार राशी १ लाख रुपैयाँ |
| पुरस्कार : प्रेस काउन्सिल आचारसंहिता पुरस्कार<br>पुरस्कृत संस्थाः चुलिमालिका(नेपालीआवाज) एफ.एम. कालिकोट | पुरस्कार राशी ४० हजार रुपैयाँ |
| पुरस्कार : प्रेस काउन्सिल भाषागत पत्रकारिता पुरस्कार<br>पुरस्कृत संस्था : बुङ्वाखा(बान्तवा भाषा)को पत्रिका | पुरस्कार राशी २० हजार रुपैयाँ |
| पुरस्कार : प्रेस काउन्सिल साहित्यिक पत्रकारिता पुरस्कार<br>पुरस्कृत कृति : शब्द संयोजन | पुरस्कार राशी २० हजार रुपैयाँ |
| पुरस्कार :प्रेस काउन्सिल महिला सशक्तिकरण पत्रकारिता पुरस्कार<br>पुरस्कृत व्यक्तिः लक्ष्मी पुन | पुरस्कार राशी २० हजार रुपैयाँ |
| पुरस्कार : प्रेस काउन्सिल सशक्त सञ्चारकर्मी पुरस्कार<br>पुरस्कृत व्यक्ति : माधव विद्रोही (झापा) | पुरस्कार राशी २० हजार रुपैयाँ |
| पुरस्कार : प्रेस काउन्सिल समावेशी पत्रकारिता पुरस्कार<br>पुरस्कृत व्यक्ति : श्री सुधा देव (सप्तरी) | पुरस्कार राशी २० हजार रुपैयाँ |
| पुरस्कार : प्रेस काउन्सिल सशक्त कलम पत्रकारिता पुरस्कार<br>पुरस्कृत व्यक्तित्रयः श्री गजेन्द्र बुढाथोकी, श्री नेत्र पन्थी र श्री हदिश खुद्दार | पुरस्कार राशी जनही रु. १५ हजार रुपैयाँ |
| पुरस्कार : प्रेस काउन्सिल क्रियाशील पत्रकारिता पुरस्कार<br>पुरस्कृत व्यक्तिद्वयः श्री अजित तिवारी र लक्ष्मी साह | पुरस्कार राशी जनही रु. २० हजार रुपैयाँ |
| पुरस्कार : प्रेस काउन्सिल युवा सशक्तिकरण पुरस्कार<br>पुरस्कृत व्यक्ति : श्री बबिता परियार (उदयपुर) | पुरस्कार राशी रु. २० हजार रुपैयाँ |

*कर्मचारी वर्ष पुरस्कारअन्तर्गत रु. २० हजार वरिष्ठ वि.सं सहायक पाचौं तहका श्री सुरेन्द्र मल्ललाई दिइयो ।*

## प्रेस काउन्सिल नेपाल

काउन्सिलको ४५ औं वार्षिकोत्सवको अवसरमा पत्रकारिता क्षेत्रमा संलग्न रही महत्वपूर्ण योगदान दिने निम्नानुसार व्यक्ति/संस्थालाई पुरस्कार प्रदान गर्ने निर्णय भएको छ ।

| सि.नं. | पुरस्कार | व्यक्ति/संस्था | रकम रु. |
|---|---|---|---|
| १. | प्रेस काउन्सिल गोपालदास पत्रकारिता पुरस्कार | रामकृष्ण रेग्मी | रु.एक लाख |

| सि.नं. | पुरस्कार | व्यक्ति/संस्था | रकम रु. |
|---|---|---|---|
| १ | प्रेस काउन्सिल आचारसंहिता पुरस्कार | सुकेश्वर पाठक | रु.३० हजार |
| २ | प्रेस काउन्सिल साहित्यिक पत्रकारिता पुरस्कार | ईश्वरचन्द्र ज्ञवाली (नयाँ यथार्थ साहित्यिक पत्रिका ) | रु.२० हजार |
| ३ | प्रेस काउन्सिल स्तम्भ लेखन पुरस्कार | श्यामसुन्दर शशी, धनुषा | रु.२० हजार |
| ४ | प्रेस काउन्सिल भाषागत पत्रकारिता पुरस्कार | मिथिला साप्ताहिक (स.जनआनन्द मिश्र, सप्तरी) | रु.१५ हजार |
| ५ | प्रेस काउन्सिल महिला सशक्तिकरण पुरस्कार | गृष्मा राजभण्डारी,काठमाण्डौ<br>सन्तोषी कार्की, दोलखा | रु.१५ हजार<br>रु.१५ हजार |
| ६ | प्रेस काउन्सिल सशक्त सञ्चारकर्मी पुरस्कार | विक्रम निरौला, मोरङ<br>राजेन्द्र नाथ, बैतडी | रु.१५ हजार<br>रु. १५ हजार |
| ७ | प्रेस काउन्सिल समावेशी पत्रकारिता पुरस्कार | प्रकाश माथेमा, काठमाण्डौ<br>ठाकुरसिंह थारु (बाँके)<br>सरिता श्रेष्ठ, धादिङ<br>मनोजकुमार माझी, सप्तरी<br>सञ्जु ब्लोन, काठमाण्डौ | रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार |
| ८ | प्रेस काउन्सिल युवा सशक्तिकरण पुरस्कार | ऋषिराम पौडेल, सिन्धुपाल्चोक<br>गोमा घिमिरे, कास्की<br>लक्ष्मण यादव, धनुषा | रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार |
| ९ | प्रेस काउन्सिल सशक्त लेखन पत्रकारिता पुरस्कार | गया यादव, पर्सा<br>लोकराज ढकाल, झापा<br>रामकुमार एलन, मकवानपुर | रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार |
| १० | प्रेस काउन्सिल क्रियाशील पत्रकारिता पुरस्कार | शरद अधिकारी, दाङ<br>रमेश लम्साल, काठमाण्डौ<br>नेत्र शाही, जुम्ला | रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार |

परिच्छेद ३

# बार्षिक प्रगति तथा गतिबिधि

## राष्ट्रपतिबाट निरीक्षण भ्रमणः

सम्माननीय राष्ट्रपति डा. रामवरण यादवले २०७१।०१।१७ गते प्रेस काउन्सिलको निरीक्षण भ्रमण गर्नु भएकोमा उहाँसमक्ष धन्यवादको पत्र पठाइएको छ ।

## स्वागत, विदाई तथा शपथग्रहणः

काउन्सिलका पदेन सदस्य एवं नेपाल पत्रकार महासंघका नवनिर्वाचित अध्यक्ष डा. महेन्द्र विष्टलाई स्वागत गरियो र आफ्नो कार्यकाल पूरा गर्नु भएका पूर्व सदस्य शिव गाउँले र गोपाल बुढाथोकीलाई ससम्मान विदाई गरियो ।

त्यसैगरी, नेपाल सरकार (मन्त्रीस्तर) को २०७१।०४।०२ को निर्णयानुसार प्रेस काउन्सिल ऐन, २०४८ को दफा ६(१)घ अनुसार ४ वर्षको लागि सदस्य पदमा नियुक्त हुनुभएका श्री सुदर्शन आचार्यलाई हार्दिक स्वागत गरियो ।

त्यस्तै, यस वर्ष खुल्ला प्रयोगितात्मक परीक्षाबाट सफल भै काउन्सिलको सेवामा नियुक्ती लेखापाल सविता ढकाल(पराजुली), सहायक कम्प्युटर अपरेटर श्री अर्जुनकुमार राउत र प्रशासन सहायक श्री महेन्द्रराज सिंहलाई अध्यक्षज्यूको समुपस्थितिमा मुख्य अधिकृतले २०७१।०३।२३ मा सपथ गराउनु भयो ।

## नेपाल–भारत प्रेस काउन्सिलबीच समझदारीः

प्रेस काउन्सिल नेपाल (Press Council of Nepal) र भारतीय प्रेस काउन्सिल (Press Council of India) बीच आपसी सम्वन्ध विस्तार गर्न ४५ औं बार्षिकोत्सवको अवसरमा देहायनुसार समझदारी पत्र (MOU) मा हस्ताक्षर गर्ने गरी प्रकृया अगाडि बढाइएको छ ।

**Memorandum of Understanding**

On cooperation between

The Press Council of India and the Press Council of Nepal

This Memorandum of Understanding is made at Kathmandu on September 22, 2014 between:

Press Council of India, based in New Delhi, India, represented by Mr. MarkandeyKatju, President of the Press Council of India,

Press Council Nepal, based in Kathmandu, Nepal, represented by Mr. Borna Bahadur Karki, Chairman of the Press Council Nepal,

Hereinafter referred to as Parties,

A. The Parties confirm their commitment to exchanging information, experience and knowledge pertaining to a Non-Violent Peaceful Journalism Coverage towards restraint in matters likely to escalate conflict and act as a catalyst in deescalating conflict and providing peaceful world order;

B. The Parties commit themselves to creating conditions within which the Indian and Nepalese journalists can manifest Journalist Code of Ethics and Press Freedom through a competitive and professional process;

C. The Parties commit themselves to building mutual confidence and trust;

D. The Parties commit themselves to promoting an enabling environment for free and responsible access to correct and unbiased information in public interest and to aid good governance.

E. The Parties commit themselves to building capabilities of media professionals by promoting qualitative media education and training facilities under the exchange programme.

F. The Parties commit themselves to strengthening the implementation of journalistic ethics in the interest of society and brotherhood across borders.

In accordance therewith the Parties decided to conclude the Memorandum of Understanding in order to establish the basis for their collaboration and for their future activities within the framework of PRESS FREEDOM.

To this end the Parties have agreed on the following:

1) To cooperate in activities promoting peace journalism;

2) To organize seminar on Reporting in conflict areas;

3) To carry out a journalism exchange program.

Any dispute arising out of the interpretation and / or implementation of this Memorandum of Understanding may be reviewed and amended at any time, by mutual written consent of the Parties. Such revisions or amendments shall come into effect on such date as may be determined by the Parties and shall form an integral part of this Memorandum of Understanding.

This Memorandum of Understanding shall enter into force on the date of its signing.

This Memorandum of Understanding shall remain in force for a period of two (2) years unless either party notifies in writing of its intention to terminate this Memorandum of Understanding three (3) months in advance.

In witness whereof, the undersigned, have signed this Memorandum of Understanding.

Done at Kathmandu on 22nd September 2014.

.................

Mr. Markandey Katju

President, Press Council of India

.................

Mr. Borna Bahadur Karki

Chariman, Press CouncilNepal

## प्रशासनिक स्थितिः

प्रेस काउन्सिल सचिवालयबाट दैनिक रुपमा कार्य सम्पादन गरी सेवाग्राहीलाई सुशासन प्रदान गर्न हाल निम्नानुसार शाखाहरुको संरचना गरिएको छ ।

१. नीति, योजना तथा प्रशासन शाखा
२. पत्रकार आचारसंहिता अनुसन्धान तथा कानुन शाखा
३. सूचना प्रविधि तथा अभिलेख शाखा
४. पत्रपत्रिका वितरण सम्परीक्षण शाखा
५. आर्थिक प्रशासन शाखा
६. मिडिया विकास कोष

| विवरण | अधिकृतस्तर | सहायकस्तर | करार सेवा | जम्मा |
|---|---|---|---|---|
| स्वीकृत दरबन्दी | ११ | १७ | | २८ |
| कार्यरत कर्मचारी | ९ | १७ | ०४ | ३० |

काउन्सिलको दैनिक प्रशासन सञ्चालनका लागि प्रशासकीय प्रमुखको रुपमा मुख्य अधिकृतको दरबन्दी रहेको छ । सह प्रशासकीय अधिकृतको असामयीक निधनपछि सह प्रशासकीय अधिकृत (आठौं तह १) रिक्त छ र उप प्रशासकीय अधिकृत (सातौं तह १) रिक्त भएकोले यी दुई अधिकृत स्तरका पदहरु पूर्ति हुने क्रममा रहेका छन् । काउन्सिलले लेखापाल (पाचौं तह) पद एक, सहायकस्तर कम्प्युटर अपरेटर (चौथो तह) पद एक र सहायकस्तर (चौथो तह) पद एक गरी तीन पद यसवर्ष खुला प्रतियोगिताबाट पूर्ति गरिएको छ । सचिवालयले दैनिक कार्यहरु सुचारु रुपबाट सञ्चालन हुँदै आएको छ ।

## विद्युतीय हाजिरीः

नेपाल सरकारले सार्वजनिक निकायमा सुशासनको नीति लागु गर्ने कार्य योजना अनुसार प्रेस काउन्सिल नेपालको सचिवालयलाई जवाफदेही, जनमुखी र पारदर्शी बनाई सेवाग्राहीहरुलाई छिटो, छरितो र कम खर्चमा काउन्सिलबाट सेवा प्रवाह गर्न कर्मचारीहरुको उपस्थिति पनि प्रमुख आधार हुने हुँदा सचिवालयमा कर्मचारीको उपस्थितिलाइ E-Attendance तथा डिजिटल प्रविधिबाट अभिलेखीकरण गर्न विद्युतीय हाजिरी मेशिन सञ्चालनमा आएको छ । "जनमूखी प्रशासन : अनुशासन र सुशासन भन्ने नारालाई अंगिकार गरिएको छ ।

## भवन निर्माण:

काउन्सिलको महत्वपूर्ण अभिलेखका रुपमा रहेका पत्रपत्रिकाहरुको सुरक्षाका साथ, कर्मचारीहरुलाई दैनिक कार्यसम्पादनका स्थान अभाव भएको हुँदा काउन्सिलको भवनमा तला थप गर्ने निर्णय भई अध्यक्षज्यूको संयोजकत्वमा गठित कार्यदलले भवन निर्माण सम्वन्धी कार्य सम्पन्न गरेको छ । भवन निर्माणको कार्य सम्पन्न भई पार्टिशन सम्वन्धी कार्यसमेत सम्पन्न भइसकेको छ । कार्यालय प्रयोजनका निमित्त डेकोरेशन तथा कार्पेटिङ र पर्दा लगाउने काम भईरहेको छ ।

## नेपाल सरकारबाट सवारी साधन उपलब्ध:

प्रेस काउन्सिल नेपालको लागि एउटा कार र एउटा जीप अत्यावश्यक भई उपलब्ध गराउन नेपाल सरकार अर्थ मन्त्रालयलाई अनुरोध गरिएको हुँदा राजस्व अनुसन्धान मध्यमाञ्चल क्षे.का.पथलैया बारा र त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल गौचरमा रहको गाडी, अर्थ मन्त्रालयबाट निर्णय भई सूचना तथा सञ्चार मन्त्रालयमार्फत काउन्सिलको नाममा प्राप्त भएको छ । उक्त सवारी साधनहरु यातायात व्यवस्था कार्यालयबाट काउन्सिलको नाममा दर्ता भई हाल प्रयोगमा आएका छन् ।

07/31 2004 11:41 FAX 97714211610 MOIC P.01

नेपाल सरकार

सूचना तथा सञ्चार मन्त्रालय

सिंहदरबार, काठमाडौं

प सं १.क.प्र. -०७०/७१-

मितिः २०७०/५/१९

विषय सवारी साधन बुझिलिने बारे।

श्री प्रेस काउन्सिल नेपाल
संचारग्राम तीलगंगा।

उपर्युक्त विषयमा तहाँ काउन्सिललाई हस्तान्तरण गर्ने गरी त्रिभुवन अन्तराष्ट्रिय बिमान स्थल कार्यालय र राजश्व अनुसन्धान विभाग मध्यमाञ्चल क्षेत्रिय कार्यालय पथलैया बाराबाट प्राप्त हुन आएका दुइ थान सवारी साधन तहाँ हस्तान्तरण गर्ने गरी मिति २०७०।५।१८ मा निर्णय भएकोले सवारी साधन बुझ्न एक जना आधिकारीक व्यक्ती तोकी पठाइ दिनु हुन अनुरोध छ।

लेखा अधिकृत

## पत्रपत्रिका वर्गीकरणः

आ.व.२०६८/२०६९ मा ८८७ वटा पत्रिकाले वर्गीकरणका लागि आवेदन फाराम भरी बुझाएकोमा मापदण्ड अनुसार सो कार्य सम्पन्न गरी नतिजा सार्वजनिक गरी सोको प्रमाणपत्रसमेत वितरण भईरहेको छ। वर्गीकरण नजिताप्रति चित्त नबुझेको भन्दै १७३ पत्रिकाबाट पुनर्मूल्याङ्कनका लागि आवेदन पेश भै सो को समेत पुर्नमूल्याङ्कन सम्पन्न भएको छ। आ.व.२०६९/२०७० को पत्रपत्रिका वर्गीरणको कार्य प्रारम्भ भईसकेको छ।

## जर्नल एवं वार्षिक प्रतिवेदन प्रकाशनः

काउन्सिलको गतिविधि एवं पत्रकारिताको वर्तमान अवस्था र पत्रकारिताको विभिन्न क्षेत्रलाई समेटेर प्रकाशन गरिने संहिता नामक त्रैमासिक (साउन-असोज) को १९ औं अंक, (कात्तिक-पुस) को २० औं अंक र (माघ-चैत) को २१ औं अंक प्रकाशन भईसकेको छ। संहितामा प्रकाशित अंग्रेजी लेख-रचनाहरुको संगालो मिडिया एण्ड इथिक्स नामको पुस्तक प्रकाशित भएको छ। त्यसैगरी, काउन्सिलले एक वर्षसम्म गरेका कामहरु समेटेर तयार पारिएको ३८औं वार्षिक प्रतिवेदन प्रकाशन गरी सम्माननीय का. मू. प्रधानन्यायधीशज्यू र माननीय सूचना तथा सञ्चार मन्त्रीज्यूबाट मुख्य सचिवसमेतको उपस्थितिमा लोकार्पण गरिएको छ।

## पत्रकार आचारसंहिता अनुगमनः

पत्रकार आचारसंहिता उल्लंघनका विषयमा सचिवालयबाट नियमित अनुगमन भइरहेको छ। हरेकदिन प्रकाशित पत्रपत्रिकाको अध्ययन गरी भइरहेको छ। छापा सञ्चार माध्यम र विद्युतीय सञ्चार माध्यमले आचारसंहिता उल्लंघन गरेको विषयलाई लिएर कारवाही गरी पाउँ भनी निवेदन पेश गर्नेको संख्या यो वर्ष ३९ रहेको छ। काउन्सिलको स्वीकृत कार्यक्रमअनुसार बर्दिया जिल्लामा पत्रकार आचारसंहिता सम्वन्धी छलफल एवं गोष्ठी सम्पन्न भएको छ।

सुनसरी जिल्लाबाट प्रकाशित महाप्रतिवाद साप्ताहिक पत्रिकाले पत्रकार आचारसंहिता विपरीत समाचार प्रकाशित गरेकोले क्षमायाचनासहित समाचार प्रकाशित गर्न र आइन्दा त्यस प्रकारका समाचार प्रकाशन नगर्न निर्देशन दिइएको। नागरिक दैनिकमा प्रकाशित आमाघरकी सञ्चालिका दिलशोभा श्रेष्ठलाई यौन दुराचार आरोपको समाचारले पत्रकार आचारसंहिता उल्लंघन गरे-नगरेको विषयमा सत्य तथ्य पत्तालगाई प्रतिवेदन पेश गर्न गठित कार्यदलले सो समाचारले पत्रकार आचारसंहिता उल्लंघन भएको ठहरसहितको सुझाव, निश्कर्षहरुसमेतका आधारमा उक्त पत्रिकाका सम्पादकलाई त्यस्ता विषयमा होशियारी पूर्वक समाचार प्रकाशन गर्न निर्देशन दिइएको साथै पत्रिका वर्गीकरणमा आचारसंहिता वापतको प्राप्ताङ्कमा ५ नकारात्मक अंक दिने निर्णय भएको छ। आ. व. २०७०/०७१ मा विभिन्न जिल्लाका ८ स्थान (बर्दिया, डडेलधुरा, बैतडी, गुल्मी, पाल्पा, सिन्धुली, सिराहा, मकवानपुर)मा आचार संहिता सम्वन्धी छलफल र गोष्ठी सम्पन्न भएका छन्। यस आ.व.मा आचारसंहिता उल्लंघनका विषयमा परेका उजुरी र निर्णयको विस्तृत विवरण परिच्छेद ४ मा उल्लेख गरिएको छ।

## प्रेस क्लिपिङ सेवाः

विभिन्न पत्रपत्रिकाहरुमा प्रकाशित समाचार, लेख, रचना एवं सूचनाहरुको दैनिक रुपमा क्लिपिङ तयार गरी सम्बन्धित ग्राहकहरुलाई प्रदान गर्दै आइरहेको छ। सरकारी एवं गैर-सरकारी कार्यालयले प्रेस क्लिपिङ सेवा उपयोग गरिरहेका छन्। यस्ता ग्राहकको संख्या ४२ रहेको छ। उक्त सेवा प्रदान गरेवापत सचिवालयलाई आम्दानीसमेत भएको छ। क्लिपिङ सेवा इमेल मार्फतसमेत उपलब्ध गराईएको छ। यो सेवा लिने ग्राहकको संख्या वृद्धि गर्ने तर्फ प्रयास भइरहेको छ।

## सूचना प्रविधि तथा अभिलेखः

पत्रपत्रिकाहरुलाई स्क्यानिङ गरी सिडीमा अभिलेख सुरक्षित गर्ने कार्य भइरहेको छ। यस आ.व.मा २,१४,३८३ पेज पत्रिका स्क्यानिङ गरिएको छ र ७२,२८१ पेज पत्रिका कटिङ गरी सीडीमा सुरक्षित गरिएको छ। लोडसेडिङको समस्या समाधान गर्न व्याकअप ब्याट्रीको व्यवस्था मिलाइएको छ। अभिलेखहरु अध्ययन/अनुसन्धान गर्ने व्यक्ति एवं संस्थाहरुलाई इमेज डाटा तथा प्रिन्ट उपलव्ध गराउने व्यवस्था मिलाइएको छ। यस आ.व.मा इमेज डाटा र समाचारको प्रिन्ट लिने व्यक्ति र संस्थाहरुको संख्या ४० रहेको छ।

पत्रपत्रिकाको हाजिर अभिलेख अद्यावधिक गरिएको छ। प्रकाशकहरुले आफ्नो प्रकाशनको अभिलेख हेर्न चाहेमा तुरुन्त उपलव्ध हुने व्यवस्था मिलाइएको छ। पत्रपत्रिकाको अभिलेखका विषयमा जानकारी लिन चाहने सम्पादक/प्रकाशक एव्म अन्य व्यक्तीहरुलाइ टेलिफोन र इमेलबाट पनि सेवा उपलब्ध हुने व्यवस्था मिलाइएको छ। काउन्सिलको नेटवर्किङ सिस्टम अपडेट गर्ने कार्य भइरहेको छ।

## कर्मचारी अवकास कोष बृद्धिः

काउन्सिलमा कार्यरत कर्मचारीहरु सेवानिबृत्त हुँदा विनियमबमोजिम उपलब्ध गराउनुपर्ने उपदानको लागि कर्मचारी अवकास कोषको व्यवस्था गरिएको छ। कोषमा आवश्यक रकम जम्मा गर्दै जाने नीति अनुसार यस वर्ष रु. ३० लाख जम्मा गरिएको छ। कोष सम्बन्धी विस्तृत विवरण परिच्छेद ५ मा उल्लेख गरिएको छ।

## पत्रकार कल्याण कोषः

आ. व. २०७०/०७१ मा विरामी भएका सबै क्षेत्रका पत्रकारहरुलाई औषधी उपचार खर्चको लागि चिकित्सकको प्रेस्क्रीप्सन अनुसार पत्रकार कल्याण कोषबाट रु. २,४१,००० आर्थिक सहयोग प्रदान गरिएको छ । आर्थिक सहयोग प्राप्त गर्ने विरामी पत्रकारहरुको विवरण परिच्छेद ५ मा प्रस्तुत् गरिएको छ।

## मिडिया संवादः

आ. व. २०७०/०७१ मा देहायका स्थानहरुमम मिडिया सम्वाद कार्यक्रम सम्पन्न भएका छन्:

## क. काठमाडौंः

२०७० साल भदौ २६ गते प्रेस काउन्सिल नेपाल मिडिया संवाद उपसमितिको संयोजनमा सूचना विभाग हल, सञ्चारग्राम काठमाडौंमा अनलाइन मिडियालाई व्यवस्थित बनाउने सम्बन्धमा संवाद कार्यक्रम सम्पन्न भयो ।

सो कार्यक्रममा काउन्सिलका अध्यक्ष बोर्णबहादुर कार्कीले अनलाइन नयाँ खालको मिडिया भएकाले अनलाइन पत्रकारको पहिचान र आचारसंहिता पालना सम्बन्धमा काउन्सिलले बढी ध्यान दिइरहेको स्पष्ट पार्नुभयो ।

व्यवसायिक पत्रकारिता गर्ने उद्देश्यले खोलिएका सबै अनलाइन मिडियालाई काउन्सिलमा सूचीकरणका लागि आउन आग्रह गर्दै उहाँले भन्नुभयो-'यसरी सूचीकरणका लागि नआएमा विद्युतीय कारोबार ऐनअनुसार राज्यको कारबाहीमा पर्ने अनलाइन मिडियाका पक्षमा बोल्न काउन्सिललाई अप्ठ्यारो पर्दछ ।' नेपाल पत्रकार महासंघका अध्यक्ष समेत रहनुभएका काउन्सिलका तत्कालीन सदस्य शिव गाउँलेले अनलाइन पत्रकारहरूलाई पत्रकार आचारसंहिता पालना गरी देश र जनताप्रति उत्तरदायीपूर्ण पत्रकारिता गर्न सुझाव दिनुभयो ।

कार्यक्रममा काउन्सिलका बोर्ड सदस्य किशोर श्रेष्ठ, काउन्सिलका सदस्य एवं मिडिया संवाद उपसमितिका संयोजक खिलबहादुर भण्डारी, काउन्सिलका मुख्य अधिकृत झविन्द्र भुसाल, अनलाइन मिडिया एशोसिएसनका अध्यक्ष दिनेश बस्नेत लगायतले बोल्नुभएको थियो ।

यसैक्रममा २०७१ साल जेठ १४ गते राष्ट्रपतिको कार्यालय, शीतलनिवास, काठमाडौंमा 'गणतन्त्रको संस्थागत विकासका लागि मिडियाको भूमिका' विषयक मिडिया संवाद कार्यक्रम आयोजना गरियो । राष्ट्रपति डा.रामवरण यादवको प्रमुख आतिथ्यमा सम्पन्न सो कार्यक्रममा प्रेस काउन्सिल नेपालका अध्यक्ष बोर्णबहादुर कार्की, काउन्सिलका सदस्यहरू, पत्रकार आचारसंहिता सुझाव कार्यदलका संयोजक डा.रामकृष्ण तिमल्सेना, बरिष्ठ पत्रकारहरू, प्राध्यापक, सह-प्राध्यापक लगायत उपस्थित हुनुहुन्थ्यो ।

## ख. चितवनः

२०७० साल कात्तिक २९ गते प्रेस काउन्सिल नेपालका अध्यक्ष, सदस्य, कर्मचारी र चितवनका पत्रकारबीच 'संविधानसभा निर्वाचनका सन्दर्भमा चितवन जिल्लाका मिडिया र पत्रकारले खेलिरहेको भूमिका' विषयक मिडिया संवाद कार्यक्रम आयोजना गर्‍यो ।

प्रेस काउन्सिल नेपालका अध्यक्ष श्री वोर्णबहादुर कार्की, सदस्यद्वय श्री किशोर श्रेष्ठ र खिलबहादुर भण्डारी, उपप्रशासकीय अधिकृत श्री दीपक खनालको उपस्थिति रहेको सो कार्यक्रमका सहभागी पत्रकारले चितवनका मिडिया र पत्रकार संयमित भएर आचारसंहिताको ख्याल गर्दै भूमिका खेलिरहेको बताएका थिए ।

उपप्रशासकीय अधिकृत खनालले सञ्चालन गरेको सो कार्यक्रममा मिडिया संवाद सम्बन्धमा सदस्य भण्डारीले प्रकाश पार्नुभएको थियो भने काउन्सिलको प्रभावकारिता लगायतका विषयमा उठेका प्रश्नको जवाफ काउन्सिल अध्यक्ष कार्की र सदस्य श्रेष्ठले दिनुभएको थियो । नेपाल पत्रकार महासंघ चितवनका अध्यक्ष श्री जनक अर्यालको सभापतित्वमा भएको सो कार्यक्रममा जिल्लाका २० जना पत्रकारको उपस्थिति रहेको थियो ।

## ग. कैलाली:

२०७० साल फागुन ६ गते धनगढीमा 'स्थानीय मिडिया र आचारसंहिता' विषयक मिडिया संवाद कार्यक्रम आयोजना गरियो । काउन्सिल सदस्य भण्डारीको प्रमुख आतिथ्यमा सम्पन्न सो कार्यक्रममा नेपाल पत्रकार महासंघका तत्कालीन केन्द्रीय सदस्य एवम् सूदूरपश्चिम संयोजक कर्ण शाह, जिल्ला शाखा अध्यक्ष भरत शाह, गोरखापत्र संस्थान संचालक समितिका सदस्य प्रकाश विक्रम शाह, सूदूरपश्चिम क्षेत्रीय सशस्त्र प्रहरी बलका बाहिनीपति जीतबहादुर पुन लगायतले बोल्नुभएको थियो ।

## घ. रुपन्देही:

२०७० साल पुष १६ गते रुपन्देहीको बुटवलमा "स्थानीय मिडियाका समस्या र समाधानका उपाय" विषयक मिडिया संवाद कार्यक्रम आयोजना गरियो । काउन्सिलका सदस्य खिलबहादुर भण्डारीले मोफसलका मिडियाको के समस्या छन् र समाधान कसरी गर्न सकिन्छ, यस निम्ति काउन्सिलको भूमिका के हुन सक्छ ? प्रष्टसंग राख्न सबै सहभागीहरुलाई अनुरोध गर्दै कार्यक्रम प्रारम्भ गर्नुभयो । कार्यक्रममा सहभागी पत्रकारहरुले देहायका धारणा राखेका थिए ।

- **डा. बाबुराम पण्डित (सम्पादक– सैनामैना दैनिक)**: मोफसलको पत्रकारिता र मिडियाका अप्ठ्यारा बारे काउन्सिलले सबै बुझेको छ तर समाधान र कार्यान्वयनको निम्ति क्रियाशील रहेको देखिंदैन । बुटवलका मिडियामा विज्ञापनको अस्वस्थ प्रतिस्पर्धा रहेको छ । दरमा एकरुपता छैन । दक्ष जनशक्तिको कमि छ । सञ्चारकर्मीहरुको दक्षता अभिवृद्धिका सवालमा काउन्सिल उदासिन देखिन्छ । मिडियामा प्रयोग हुने भाषाशैली शुद्ध र ठीक छैन । भाषाको सही ज्ञान नहुनेले पत्रकारिता नगरे हुन्छ । आर्थिक पक्ष सवल र सुदृढ छैन ।
- **भवानी प्रसाद पाण्डे (बुटवल एफ एम)**: आर्थिक पक्ष कमजोर रहेकोले स्थानीय मिडियामा सञ्चालनकै समस्या देखिएको छ । विज्ञापनमा अस्वस्थ प्रतिस्पर्धा छ । थोरै जनशक्तिले धेरै काम गर्नुपर्ने अवस्था छ । थोरै जनशक्तिले धेरै काम गर्नु पर्ने, त्यसरी काम गर्नेलाई भनेजति पारिश्रमिक दिन नसकिने । जनशक्ति कम भएकै कारण हामीले काम गरिराखेका रुपन्देही र पाल्पाका अधिकाँस रेडियोमा आफूले बजाएको समाचारको रेकर्ड राखिएको छैन । विहान के समाचार बजाइयो भन्ने कुरा नै कसैलाई थाहा हुँदैन । रेकर्ड नभएकै कारण भोलि मुद्दामामिला परेको खण्डमा ठूलो समस्या झेल्नु पर्ने अवस्था विद्यमान छ । पारिश्रमिक थोरै पाए पनि धेरै भन्नुपर्ने बाध्यता छ । त्यो पनि समयमा पाइँदैन । मिडियाका निम्ति ठूलो समस्याको रुपमा लोडसेडिङ छ । राष्ट्रिय समस्या लोडसेडिङबाट मिडियालाई कसरी मुक्त गर्न सकिन्छ भन्ने

विषयमा प्रेस काउन्सिलको ध्यान जानु जरुरी छ । समस्या सुन्ने मात्र होइन, काउन्सिलले समाधान र कार्यान्वयन नै गर्नुपर्छ ।

- **विष्णुप्रसाद पौडेल (पत्रकार)** : राज्यले मिडियालाई उद्योग सरहको मान्यता दिए पनि सोअनुरुप सुविधा छैन । अन्य उद्योगलाई लोडसेडिङका सन्दर्भमा सुविधा दिंदा मिडियामाथि विभेद छ । दिनको १२ घण्टा लोडसेडिङ हुन थालेको छ । १२ घण्टा जेनेरेटर चलाउँदा दिनको ३ हजारका दरले महिनामा ९० हजार इन्धनबापत खर्च हुन्छ । लोडसेडिङको समस्या समाधान हुने हो भने इन्धनबापतको रकम पत्रकारको पारिश्रमिकमा खर्च गर्न सकिन्छ । काउन्सिलले अनुगमन र वर्गीकरण मात्र नगरी यो दायराभन्दा अलि माथि उठेर मिडियासम्बन्धी काम गर्नुपर्छ जस्तो लाग्छ ।
- **मनिकर कार्की (दैनिकपत्र)** : काठमाडौंका केही ठूलाबाहेक देशैभरका सबै मिडिया साहुले चलाएको जस्तो लाग्दैन । मोफसलका मिडियाहरु माथि उठ्न नसक्नु र संकटैमात्र आउनुको कारण के हो भने मोफसलमा प्रकासकीय दायित्व निर्वाह गरेर मिडिया चलाउने मान्छे नै छैन । त्यसकारण मिडिया झोलेभन्दा माथि उठ्न सकेको छैन । उद्योग भन्ने, सहजै रुपमा खोल्ने, सहजै बन्द हुने, दायित्ववोध नै गर्न नपर्ने । मन लागे छाप्ने मन नलागे बन्द गर्ने । दायित्ववोध गराउनेतर्फ काउन्सिलले केही गर्न सक्छ कि ? समानुपातिक विज्ञापनको सन्दर्भमा वार्षिक ४ अर्बको सरकारी विज्ञापनमा ४० प्रतिशतसम्म एउटै मिडिया हाउसले लगेको भन्ने कुरा खिलासरले बताउनु भयो । सरकारले समानुपातिक विज्ञापनको जति नै हल्ला पिटे पनि त्यसलाई व्यवहारमा कार्यान्वयन गर्न सकेको छैन । यसमा लबिङको जरुरत छ । समानुपातिक विज्ञापनको सवालमा सभा, सेमिनारमा धेरै बहस र छलफल भएका छन् तर नेपाल पत्रकार महासंघले सरकारसंग लबिङ गर्न सकेको छैन । विज्ञापन प्राप्तीमा अवरोध पुऱ्याउने विद्यमान ऐन, कानूनमा परिवर्तन जरुरी छ । पत्रपत्रिकाको विक्रीवितरण पक्ष कमजोर हुँदै गएको छ । पत्रिका किनेर पढ्ने संस्कार हराउँदै गएको छ ।
- **भुवन कार्की (भ्यू क्याप्सन साप्ताहिक)** : पहिला रहरले पत्रकार भइयो । अहिले कतै जान नसक्ने भएपछि बाध्यताले पनि पत्रकार हुनु परेको छ । त्यसका लागि एउटा मिडिया चलाउनै पऱ्यो । मेरो गुनासो छ प्रेस काउन्सिलसंग । पत्रपत्रिकाको वर्गीकरण किन ढिला गरिन्छ ? १/२ महिनाको एकैपटक छापेर लगे पनि अभिलेखमा चढ्ने गरेको छ । पछिल्लो समय काउन्सिलले प्रकाशित गरेको नतिजामा बुटवल, भैरहवातिर नामै नसुनिएका पत्रिका पनि वर्गीकृत भएका छन् ।
- **नवराज कुंवर (बुटवल टुडे दैनिक)** : काउन्सिलले समस्या सुन्ने र बुझ्ने मात्र होइन, समाधानको लागि ठोस पहल पनि गर्नु पर्छ । बेलाबेलामा मिडियाहरुको अनुगमन गर्छ । रिपोर्ट सम्बन्धित मिडियालाई दिंदा राम्रो हुने थियो । यसबाट कमिकमजोरीमा सुधार भई व्यवसायिकतातर्फ अग्रसर हुन मद्दत पुग्छ । मिडियालाई उद्योगसरह मान्यता दिएपछि राज्यले सोहीबमोजिम सहुलियत पनि दिनु पर्छ ।

- **सावित्रा अर्याल (मुक्ति एफ एम)** : २०६५ सालदेखि हामी महिलाले मुक्ति एफएम शुरु गऱ्यौं। शुरुवाती दिनदेखि नै संघर्षमा छौं। महिलै महिलाले मात्र सञ्चालन गरेको संभवतः नेपालकै पहिलो भनेर दावी गर्छौं। रेडियो चलाउन धेरै कठिनाई छ। काम गर्ने बहिनीहरुलाई तलव दिन सकेका छैनौं। तर पनि उहाँहरु जतिबेला भने पनि आएर काम गर्नुहुन्छ।
- **दिनेश पाण्डे** : यहाँका मिडियामा पनि कपिपेष्टको समस्या छ। एउटा मिडिया पढेपछि त्यो समाचारको निम्ति अर्को मिडिया पढ्नु पर्दैन। एउटा मिडियामा भएको गल्ती हुबहु अन्यमा पनि देखिने गरेको छ। पत्रकारहरुको क्षमता विस्तारका सन्दर्भमा पनि प्रेस काउन्सिलले ध्यान दिनु जरुरी छ।
- **रुद्रहरि कुंवर** : समस्याबारे कुरा गर्ने एउटा फोरम पायौं। बेलाबेलामा हामी स्वयं पनि छलफल गर्न सक्छौं नि ! प्रेस काउन्सिल आइदिएर चिन्तन मनन गर्नुभन्दा हामी स्वयं सम्पादक/प्रकाशक/पत्रकारहरुबीच आफ्ना समस्याबारे निरन्तर बहस र छलफल चलाउँदा राम्रो हुन्थ्यो। मिडियामा आर्थिक लगानी राम्रोसंग भएको छैन। एउटा पत्रकारले १०/१२ वटा रेडियो, २/४ वटा पत्रिकामा काम गर्नुपर्ने बाध्यता छ। यति नगरेसम्म ऊ बाँच्न सक्तैन। मिडियाका समस्या न्यूनीकरण गर्न व्यवस्थापन र पत्रकारिता अलग हुनु पर्दछ। लोककल्याणकारी विज्ञापनको लागि मात्र पत्रिका ननिकालौं। अन्यत्रको विसंगति र विकृति बुटवल नगरीमा नभित्र्याऊँ। हामी आफै पनि बेलाबखत यस्ता छलफलहरु गर्ने गरौं।
- **गुरुदत्त ज्ञवाली**: विज्ञापन प्राप्तीमा कठिनाई छ। मिडियाका संख्या धेरै भए। हामी मिडियाकर्मीहरुको संस्कारमा सुधार हुनु जरुरी छ। पत्रकारहरुलाई तलव धेरै दिने रहर छ तर आर्थिक कठिनाइका कारण दिन सकिएको छैन। न्यूनतम पारिश्रमिक जेनतेन ढिलो चांडो दिइराखेका छौं। विज्ञापन उठाएर तलव खाऊ भन्नुपर्ने अवस्था छ। विज्ञापन रंगीन पत्रिकाले बढी पाउँछन्, दिनेले पनि उनीहरुलाई नै दिन्छन्। त्यसकारण हामी श्यामस्वेतवालाहरुले दर घटाएर भएपनि विज्ञापन लिन बाध्य छौं।
- **कृष्ण अर्याल (रेडियो लुम्बिनी)** : हाम्रो विधानमा नै रेडियोका सेयर धनीले नाफाबापत जिन्सी अथवा नगद लिन नपाउने व्यवस्था छ। रेडियोले कमाएको पैसा या त पूर्वाधार विकासमा खर्च गरिन्छ या पत्रकारको तलवमा। रेडियो लुम्बिनी स्थापित र पूर्वाधारयुक्त (आफ्नै भवन) भन्ने देखिन्छ। तर तलव खुवाउन नसकेर के गर्ने भन्ने अन्यौलमा छौं। रेडियोमा एकदमै वरिष्ठ साथीहरु हुनुहुन्छ। सरकारले कर्मचारीहरुको तलव बढायो तर हामी साथीहरुको तलव बढाउन सक्ने स्थितिमा छैनौं। तैपनि कुनै पत्रकार साथी रेडियोबाट विस्थापित हुन नपरोस् भन्ने हामी सञ्चालकको चाहना छ।
- **नरेश केसी (लुम्बिनी दैनिक)** : पछिल्लो समय नेपालमा बिज्ञापन एजेन्सीहरु विजनेशको रुपमा स्थापित भइरहेका छन्। भ्याटमा दर्ता भएपछि शाखाको रुपमा सजिलै दर्ता गर्न सकिने रहेछ। रुपन्देही जिविसमा विज्ञापनबापत ठूलो रकम रहेको हुन्छ। हामी पत्रिकाकोतर्फबाट माग्न जाँदा दिंदैनन् तर विज्ञापन एजेन्सीलाई कमिशनको चक्करमा

सजिलै दिन्छन् । एजेन्सीले केही मार्जिन कमिशन खाएर पुनः स्थानीय पत्रिकालाई त्यो विज्ञापन उपलब्ध गराउँछन् । पत्रिकाले सोझै विज्ञापन पाउन सक्ने अवस्था सिर्जना गर्न काउन्सिलले पहल गर्नु पर्छ । काउन्सिलको अभिलेखमा पत्रिका दर्ता गराउन जाँदा कसैलाई हुलाक वा पोखरा सञ्चार केन्द्रको पत्र ल्याउन भनिन्छ, कसैको पत्रिका भने पहुँचका आधारमा सोझै दर्ता गरिन्छ । यो विभेदकारी व्यवहारको अन्त्य गर्नु जरुरी छ । काउन्सिलले पत्रिकाको अनुगमन वर्गीकरणको वेलामा मात्र नगरी नियमित रुपमा गर्नु प्रभावकारी हुन्छ ।

- **खिलबहादुर भण्डारी (सदस्य, प्रेस काउन्सिल)**ः समानुपातिक विज्ञापन राज्यकै आधिकारिक निकाय सूचना विभागबाट वितरण गर्ने सरकारले निर्णय गरिसकेको छ । कार्यान्वयन हुन मात्र बाँकी छ । यसमा सबभन्दा बढी विरोध विज्ञापन एजेन्सीको हो । समानुपातिक विज्ञापन नीति लागू भएमा विज्ञापन एजेन्सीहरुको रोजीरोटी खोसिनुका साथै एजेन्सी नै बन्द हुने भएकाले यसको विरोधमा उनीहरु अदालत गएका छन् । मुद्दा विचाराधिन छ । समानुपातिक विज्ञापन नीति लागू हुनुपर्छ भनेर प्रेस काउन्सिल नेपाल र नेपाल पत्रकार महासंघले दवावमूलक लबिङ सम्बन्धित निकायमा गरिराखेको छ ।
- **सिद्धिचरण भट्टराई (कार्यकारी निर्देशक लुम्बिनी टेलिभिजन)** : जिज्ञाशा मात्र - स्थानीय स्तरमा वर्गीकरणसम्बन्धी एउटा संयन्त्र गठन भएको थियो, त्यसले के गरिराखेको छ ? (यस विषयमा प्रेस काउन्सिलका सदस्य श्री खिलबहादुर भण्डारी र महासंघका अध्यक्ष श्री दीपक ज्ञवालीले जवाफ दिनुभयो ।)
- **डि. आर. घिमिरे (दैनिक पत्र)** : केही अपवादबाहेक मिडियाहरु संस्थागत नै हुन सकेका छैनन् । झोले टाइपका वा एकल व्यक्तित्वको नेतृत्वमा चलेका छन् । त्यसमा कार्यरत जनशक्ति पनि मिडियाका सबै पाटा बुझ्ने खालका भएनन् । यसको लागि मिडियाका सबै पक्षमा (व्यवस्थापन र सम्पादन) कार्यरत जनशक्तिलाई एकप्रकारको ओरिएन्टेशनको जरुरत देखिएको छ । पत्रकारिता पेशामा रहेर पत्रकारिताको व्यवस्थापन गर्ने र अरु कुनै पसलको व्यवस्थापन गर्ने कुरा भिन्न हो भनेर उहाँहरुलाई बुझाउन जरुरी छ । हामीले बेलाबेलामा पत्रकारहरुलाई ओरिएन्टेशन दिन्छौं । आचार संहिता बारे पत्रकारहरुलाई काउन्सिलले ओरिएन्टेशन दिन्छ । मिडियाका स्टाफहरुलाई पनि आचारसंहिताका बारेमा जानकारी दिनुपर्‍यो । अहिले धेरैजसो ठाउँमा धेरै पैसा जम्मा गरेर धेरै मानिसलाई सञ्चालक बनाएर संस्था टिकाउने चलन छ । ती प्रमोटरहरुलाई पत्रकारिता र यसको आचारसंहिताका बारेमा केही थाहा छैन । उहाँहरुलाई पनि इथिक्सको बारेमा जानकारी गराउन जरुरी छ । प्रशस्त पैसा कमाइसकेपछि आफू जहिले पनि हाइलाइट हुने, आफ्ना कुकर्मबाट बच्न फटाहा कुराहरु रातदिन छाप्ने र मिडियालाई गलतढंगले प्रयोग गर्ने देखिएको छ । त्यसकारण उहाँहरुलाई यसो होइन, यसो हो है भनेर बुझाउन सकियो भने त्यहाँ काम गर्ने पत्रकारलाई पनि केही प्रेसर कम हुन्थ्यो होला ।

  मोफसलमा साना मिडियाहरु संगठित भएनन् । काठमाडौंमा ५ वटा मिडियाले संगठन बनाएर देश थर्काउँछन्, मन्त्रालयलाई प्रभावमा पार्छन् । तर, तिनीहरुमा अरु साना मिडिया पनि हामीलाई चाहिन्छ भन्ने भावना छैन ।

समानुपातिक विज्ञापनको सवालमा केन्द्रमा नीतिगत रुपमा सबै कुरा सकिएको छ । तर, केही विज्ञापन एजेन्सी र केही ठूला मिडियाको दवाब अथवा जोरजबरजस्तीका कारणले राज्यको निर्णय नै कार्यान्वयन नगरी बस्न मिल्छ ? २ जना मान्छे ओराल्दैमा, २ दिन अखवारको पाना रंगाउँदैमा त्यत्रो निर्णय कार्यान्वयन नगरी बस्दा हामी पनि चुप लागेर बस्नुपर्ने यो भन्दा लाजमर्दो कुरा के हुन सक्छ ? कसको स्वार्थमा धक्का लाग्छ, लाग्दैन त्यो आफ्नो ठाउँमा छ । देशभरका मिडिया लाभान्वित हुने हुँदा यसलाई अविलम्व कार्यान्वयन गर्नुपर्छ । समानुपातिक विज्ञापन नीति कार्यान्वयन भएमा सबै मिडियाले तलव दिन सक्ने र मिडियाहरु पनि टिक्ने स्थिति बन्छ ।

- **मोहन चापागाइँ (अध्यक्ष, सामुदायिक रेडियो प्रसारक संघ)** : समानुपातिक विज्ञापन प्रणालीलाई व्यवहारिक रुपमा कार्यान्वयन गर्ने हो भने ३ अरबको हाराहारीमा रहेको सरकारी विज्ञापनको रकमलाई हाल प्रकाशनमा रहेका करिब ९ सय पत्रपत्रिका (दैनिक, साप्ताहिक, पाक्षिक, मासिक आदि), ५०० को हाराहारीमा रहेका रेडियो स्टेशन र ३०/३५ को हाराहारीमा रहेका साना-ठूला टेलिभिजन आदिलाई समानुपातिक (अनुपात) हिसाबले बाँड्ने हो भने एउटा संस्थाले मासिक डेढलाखभन्दा बढी प्राप्त गर्न सक्छन् । त्यसबेला प्रेस काउन्सिल, पत्रकार महासंघ र न्यूनतम पारिश्रमिक निर्धारण समितिलाई श्रमजीवी पत्रकार ऐन कार्यान्वयनको सवालमा कडा रुपमा प्रस्तुत हुने अवसर मिल्न सक्छ ।

अहिले संसारभर नै छापेर वितरण गर्ने पत्रपत्रिकाको संख्या घट्दो छ । किनभने प्रविधिले त्यसलाई रिप्लेस गरिराखेको छ । आजकल हरेक मान्छेको हातमा मोबाइल छ, अनलाइनहरुको माध्यमबाट मानिसले पत्रिका पढ्न सक्छन् । खासगरी हाम्रोजस्तो विकासोन्मुख मुलुकमा त्योभन्दा अझै सस्तो र व्यवहारिक रुपमा रेडियो स्टेशनहरुले भूमिका निर्वाह गरिराखेका छन् । बिहान एकपटक रेडियो सुनेपछि पत्रिका पढ्दा सबैकुरा पहिले नै थाहा भएजस्तो लाग्छ । यसकारण पत्रपत्रिकाको विक्रीवितरण (सर्कुलेशन) घटेको हुनसक्छ । पत्रपत्रिकाले आगामी दिनमा नयाँ रुप र नयाँ ढंगले प्रस्तुत हुँदै जानुपर्ने आवश्यकता छ । यसका निम्ति स्थानीय अखवारले स्थानीय म्याटरहरुलाई बढी प्राथमिकता दिने कुराहरु गर्न सकिन्छ ।

२०६६ साल साउन ४ गते नेपाल सरकारले एउटा निर्णय गरेको छ । त्यसमा 'विद्युतीय सञ्चारमाध्यमहरु पनि आजको सन्दर्भमा सञ्चारका अरु माध्यमजत्तिकै सशक्त माध्यम हुन्' भनिएको छ र लोककल्याणकारी विज्ञापन उपलब्ध गराउने निर्णय भएको छ । सरकारले एक त्रैमासिकका लागि २ करोड विनियोजन गरेको थियो । छापामाध्यमहरुको लागि त्यसबेला ८ करोड विनियोजन गरेको थियो । सोही निर्णयमा 'विद्युतीय सञ्चार माध्यमहरुलाई पनि अर्को वर्षदेखि समान रुपमा लोककल्याणकारी विज्ञापन उपलब्ध गराउने' भनी प्रष्ट रुपमा भनिएको छ । तर, दुर्भाग्य त्यो कार्यान्वयन हुन सकेको छैन ।

नेपालको अन्तरिम संविधानले पनि सबै सञ्चारमाध्यमलाई समान व्यवहार गरिने भनेर प्रष्ट पारेको छ । तथापि विद्युतीय सञ्चारमाध्यमहरु लोककल्याणकारी विज्ञापनको समान

हकबाट बन्चित भएको अवस्था छ । यो मुद्दा पनि प्रेस काउन्सिलले अरु मुद्दासंग जोडेर उठाउनु पर्छ भन्ने लाग्दछ ।

- **खिलबहादुर भण्डारी (सदस्य, प्रेस काउन्सिल)** : विद्युतीय कारोवार ऐन अन्तरगत केही महिनाअगाडि २ जना पत्रकार गिरफ्तारीमा पर्नुभएको थियो, सुशील पन्त र सन्तोष भट्टराई । कुनै पनि पत्रकारले आचारसंहिता उल्लंघन गर्‍यो भने त्यसलाई कारवाही गर्ने निकाय प्रेस काउन्सिल हो । राज्य, पुलिस, प्रशासन होइन भनेर पुलिस हिरासतबाट मुक्त गराएका थियौं । त्यसको रेकर्ड छ । यो विद्युतीय कारोवार ऐन हामी सबै पत्रकारहरुको टाउकोमाथि एउटा तरवारको रुपमा झुण्डिरहेको छ । यदि तपाईंले अनलाइन, फेसबुक र ट्वीटर चलाई राख्नुभएको छ, त्यसमा तपाईंले कसैको बारेमा गलत कुरा लेख्नुभयो र तपाईंका विरुद्ध मुद्दा पर्‍यो भने ५ वर्ष जेल हाल्ने कानून छ, विद्युतीय कारोवार ऐनमा । हामीले विद्युतीय कारोवार ऐनका विरुद्ध पनि लड्नुपर्ने अवस्था छ । हामी धेरै पटक डेलिगेशन गएका छौं यो विद्युतीय कारोवार ऐनका सन्दर्भमा । अनलाइनहरुलाई नियमन गर्ने कुनै कानून र संस्था छैन । त्यसैले यिनीहरुलाई पनि आचार संहिताको दायराभित्र ल्याउनु पर्छ भनेर सूचीकृत गर्न थालेका छौं । यसको लागि काउन्सिलले सूचना जारी गरेको छ । तपाईंहरु कोही छुट्नु भएको छ भने तुरुन्त सूचीकृत गर्नुहोला ।

- **दीपक ज्ञवाली (अध्यक्ष, नेपाल पत्रकार महासंघ रुपन्देही, कार्यक्रमका सभापति)** : यो कार्यक्रम निकै हतारकाबीचमा राखेका हौं । त्यसको बावजुद पनि सबै सहभागी हुनुभयो म हार्दिक आभार व्यक्त गर्दछु । पत्रकार महासंघ पत्रकारहरुको हकहितका निम्ति लड्ने र प्रतिवद्ध रहने संस्था हो । त्यस अर्थमा हामीले पत्रकारहरुका मुद्दालाई निडरताकासाथ उठाउँछौं । मिडिया हाउसका समस्या समाधान गर्ने र बचाउने सन्दर्भमा पनि महत्वपूर्ण भूमिका खेलेका छौं । रुपन्देहीमा हामीले धेरैपटक मिडिया हाउसहरुको अनुगमन गरेका छौं । थुप्रै पटक मिडियाहरु बच्नुपर्छ भनेर बहस गरेका छौं । किनभने मिडियाकर्मी र मिडिया एकअर्काका परिपुरक हुन् । यिनीहरुबीच नङ र मासुकोजस्तै सम्बन्ध हुन्छ । मिडिया रहे मिडियाकर्मी रहन्छन्, मिडियाकर्मी नरहे मिडिया पनि रहन्न । यस अर्थमा यी दुवैलाई बचाउनको लागि पनि महासंघले महत्वपूर्ण भूमिका खेल्नुपर्छ भन्ने हामीलाई लागेको छ ।

  केही समययता देशका विभिन्न ठाउँमा मिडिया हाउस र पत्रकारहरु बारे बेथितिका कुरा उठेको हामी पाउँछौं । पत्रकार र मिडिया हाउसकै बारेमा पनि टिकाटिप्पणी हुने गरेको पाउँछौं । कमसेकम हाम्रो जिल्लालाई त्यस्तो बेथितिबाट मुक्त बनाउनका निम्ति म सबैसंग अपिल गर्दछु । यस्ता कार्यक्रम नियमित रुपमा गर्ने हो भने एकैपटक समस्या समाधान नभए पनि त्यसलाई न्यूनीकरण गर्ने उपाय बन्न सक्छ । पत्रकार महासंघ, प्रेस काउन्सिल, मिडियाकर्मी र मिडिया हाउसहरु सबै मिलेर लाग्यौं भने हाम्रा समस्या कम हुँदै जानेछन् भन्ने विश्वासकासाथ यो कार्यक्रम हाम्रो जिल्लामा राखिदिएकोमा काउन्सिलका अगुवाहरुलाई, सदस्य खिलबहादुर भण्डारी र जगदीश पौडेल सरलाई धन्यवाद दिंदै कार्यक्रम यहीं सकिएको जानकारी गराउँदछु ।

# परिच्छेद ४

# आचारसंहिता अनुगमन तथा अनुसन्धान

प्रेस काउन्सिल ऐन, २०४८ ले स्वस्थ पत्रकारिताको विकासका लागि पत्रकारितासम्बन्धी आचारसंहिता तयार गरी लागू गर्ने कार्यको जिम्मेवारी प्रेस काउन्सिल नेपाललाई दिएको छ। प्रेस काउन्सिल नेपालको ऐनले प्रेस काउन्सिललाई पत्रकार एवं सञ्चारगृहले पत्रकार आचारसंहिता उल्लंघन गरेको अवस्थामा कारबाही गर्न सक्ने अधिकार पनि दिएको छ। प्रेस काउन्सिल नेपालले पत्रकार आचारसंहिता पालनालाई प्रभावकारी बनाउन यसलाई समयानुकूल संशोधन र परिमार्जन गर्दै लागू गरेको छ।

आचारसंहितालाई प्रभावकारी बनाउन प्रेस काउन्सिलले प्रचारप्रसार, अन्तरक्रिया एवं मिडिया संवादजस्ता कार्यक्रम केन्द्र एवं मोफसलमा गर्दै आएको छ। केन्द्रीयस्तरमा मात्र सञ्चार माध्यमहरुमा आएको विविधतालाई सम्बोधन गर्न सहज नहुने स्थितिको दृष्टिगत गरी पत्रकार आचारसंहिताको अनुगमन प्रभावकारी बनाउनका लागि जिल्लातहमा समेत संयन्त्र खडा गरी अनुगमन कार्य अगाडि बढाइएको छ। आ.व. २०६८/०६९ देखि १० जिल्लाबाट विकेन्द्रीकरणको सुरुवात गरिएकोमा आ.व.०६९।०७० मा झापा, सुर्खेत र सर्लाहीमा समेत स्थानीय संयन्त्र खडा गरिएको छ। हाल १३ जिल्लामा समिति गठन भै कार्य भइरहेको छ। यो विकेन्द्रीकरण क्रमशः सबै जिल्लामा लागू गर्दै लैजाने कार्यक्रम रहेको छ।

## आचारसंहिता अनुगमन उपसमिति

**कार्यक्षेत्र:**

१. पत्रकार आचारसंहिताको प्रभावकारी कार्यान्वयन सुनिश्चित गर्ने।

२. आचारसंहिता उल्लंघनका विषयमा काउन्सिलमा प्राप्त उजुरीहरूको सुनुवाई गर्ने।

३. प्रेस जगतलाई समाजप्रति जिम्मेवार र स्वयंमा मर्यादित तुल्याउन सहायक हुने खालका गोष्ठी, संवाद र अन्तरक्रियाहरू आयोजना गर्ने।

मर्यादित, स्वस्थ र स्वच्छ पत्रकारिताको विकासका निम्ति काउन्सिलले पत्रकार आचारसंहिता निर्माण गरी पालना भए/नभएको विषयमा दैनिक अनुगमन गर्दै आएको छ। पत्रकार आचारसंहिता उल्लंघनका विषयमा कसैले उजुरी दिएमा सोसम्बन्धमा छानबिन गर्न काउन्सिलले आचारसंहिता अनुगमन तथा संवाद उपसमिति गठन गरेको छ। यस उपसमितिले आचारसंहिता पालनाका सन्दर्भमा सम्बन्धित सञ्चारमाध्यमलाई ध्यानाकर्षण गराउने एवं सचेत

गराउनेलगायतका कार्यहरू गर्दै आएको छ । दैनिक रुपमा आचारसंहिता अनुगमन गर्न एवं प्राप्त उजुरीहरुको आवश्यक कार्यान्वयन गर्न आचारसंहिता अनुगमन, अनुसन्धान तथा कानुन शाखा क्रियाशील रहेको छ ।

आ.व. २०६९/०७० मा आचारसंहितासम्बन्धी उजुरी, स्वअनुगमन र बोधार्थको विवरण निम्नानुसार छ :

| उजुरी | स्वअनुगमन | बोधार्थ |
|---|---|---|
| ३९ | २ | २२ |

### १) महम्मद सहाबुद्धिन
### विरूद्ध
### वीरगञ्ज समाचारपत्र दैनिक

नेपाली काँग्रेस, पर्सा, वीरगञ्जका नगर सभापति महम्मद सहाबुद्धिनले वीरगञ्जबाट प्रकाशित हुने वीरगञ्ज समाचारपत्र दैनिकले पटक-पटक आफूलाई भारतीय नागरिक भएको शीर्षक राखी समाचार सम्प्रेषण गर्दै आएकोले आवश्यक कारवाहीको लागि २०७०।०२।१३ गते दिनुभएको उजुरीको सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको वैठक भयो । बैठकले वीरगञ्ज समाचार दैनिकका तर्फबाट प्राप्त अख्तियार दुरुपयोग अनुसन्धान आयोगको पत्रका सम्बन्धमा निवेदक महम्मद सहाबुद्धिनको प्रतिक्रिया माग गर्ने निर्णयानुसार निजलाई पत्राचार गरिएको थियो ।

महम्मद सहाबुद्धिनले २०७०।०५।०६ गते पठाउनुभएको जवाफ काउन्सिलको आचारसंहिता अनुगमन उपसमितिको २०७०।०७।१३ गतेको वैठकमा प्रस्तुत गरिंदा वीरगञ्ज समाचारपत्र दैनिकलाई ७(सात) दिनभित्र निवेदकको खण्डन प्रकाशन गर्न र खण्डन प्रकाशित गर्नुनपर्ने कुनै आधार प्रमाण भए पेश गर्न २०७०।०८।१० गते ताकेता गरेको थियो तर वीरगञ्ज समाचारपत्र दैनिकले काउन्सिलको आदेशको अवज्ञा गरी कुनै प्रतिक्रिया नदिएकाले काउन्सिलको आचारसंहिता अनुगमन उपसमितिको २०७१।०१।०८ गतेको वैठकको निर्णयानुसार वीरगञ्ज समाचारपत्र दैनिकलाई अवज्ञाकारीको सूचिमा राख्ने र यसपूर्व काउन्सिलबाट भएको आदेशानुसारको निवेदकको खण्डन प्रकाशित गर्ने अन्यथा प्रचलित पत्रकार आचारसंहितानुसार प्रेस पास निलम्बन गर्न सम्बन्धित निकायलाई सिफारिस गर्ने व्यहोराको पत्र वीरगञ्ज समाचार पत्र दैनिकलाई पठाई त्यसको वोधार्थ निवेदकलाई दिइएको ।

## २) डिल्लीबजार कन्या बहुमुखी क्याम्पस

## विरुद्ध

## www.extrakhabar.net तथा www.nepaliheadline.com

डिल्लीबजार कन्या बहुमुखी क्याम्पसका छात्राहरुको विषयमा अश्लिल तथा आपत्तिजनक सामग्री प्रकाशित गरेकोले www.extrakhabar.net तथा www.nepaliheadline.com का पत्रकारहरु सुशील पन्त, सन्तोष भट्टराई र पुष्कर कँडेल समेतलाई कारवाही गरीपाउँ भनी क्याम्पस प्रमुखले मिति २०७० असार २८ गते दर्ता गराउनु भएको उजुरीका सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको वैठकको निर्णयानुसार ३(तीन) जना सवै पत्रकारहरुलाई आफ्नो भनाई एवं स्पष्टीकरण पेश गर्न पत्राचार गरिएको थियो । ३ (तीन) जना सवैले २०७०।४।६ गते स्पष्टिकरण पेश गरी प्रकाशित समाचारबाट क्याम्पस परिवार तथा त्यहाँ अध्यनरत छात्राहरुमा परेको मर्का तथा असजिलोप्रति दुःख व्यक्त गर्दै क्याम्पस परिवारको आत्मसम्मान , प्रतिष्ठा तथा इज्जतमा पुगेको क्षति प्रति आत्मलोचना गरेको र अव उप्रान्त त्यस किसिमको सामग्री प्रकाशन नगर्ने लिखित प्रतिवद्धता समेत गरेकोले आचारसंहिता अनुगमन उपसमितिको निर्णयानुसार आरोपित पत्रकारहरुलाई एक पटकको निमित्त सचेत गराई पत्राचार गरिएको र सोको जानकारी सम्बन्धित क्याम्पसलाई गराइएको ।

## ३) पदमलाल पराजुलीको वारेश उद्धवप्रसाद चौलागाईं

## विरुद्ध

## आवेग साप्ताहिक

आवेग साप्ताहिक वर्ष ४, अंक ४, २०६८ श्रावण ३० गते सोमवार पृष्ठ ४ मा प्रकाशित सूचना मालपोत कार्यालय काभ्रेमा बुझाएकोमा त्यसै ठाउँमा “धुलिखेल मालपोत कार्यालय काभ्रेपलाञ्चोकको ३५ दिने सूचना” उल्लेख गरेको तर सोही अंकको सोही पृष्ठको सोही ठाउँमा प्रेस काउन्सिल नेपालमा बुझाएको पत्रिकामा “कम्प्युटर एसोसियसन अफ नेपाल (क्यान) काभ्रेको निर्वाचन कार्यक्रम” सम्बन्धी सूचना प्रकाशित गरी पत्रकार आचारसंहिताको गम्भीर उल्लंघन गरेकोले आवश्यक कारवाहीका लागि पदमलाल पराजुलीको वारेस उद्धव प्रसाद चौलागाईंले मिति २०७०।२।२० गते उजुरी दर्ता गराउनुभएको थियो । उजुरीको सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको निर्णयानुसार काउन्सिलबाट २०७०।८।१० गते स्पष्टिकरण माग गरिएकोमा सो साप्ताहिकका प्रकाशक/सम्पादक रामकृष्ण बञ्जाराले मिति २०७०।८।२४ मा दर्ता गराउनुभएको स्पष्टिकरण चित्तबुझ्दो नभएको र आवेग साप्ताहिकबाट पत्रकारआचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४) को गम्भीर उल्लंघन भएकोले आवेग साप्ताहिकलाई एक आर्थिक बर्षको लागि वर्गीकरण प्रक्रियाबाट अलग गर्ने गरी आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१।०१।०८ गतेको वैठकको निर्णयानुसार वितरण संपरीक्षण समिति समक्ष सिफारिस गरिएको, सोको वोधार्थ निवेदक र पत्रिकाका सम्पादक दुवैलाई दिईएको ।

## ४) सामुदायिक तथा ग्रामीण विकास समाज

### विरुद्ध

### ईमेज साप्ताहिक तथा रेडियो त्रिशुली

नुवाकोटबाट प्रकाशित हुने इमेज साप्ताहिक तथा नुवाकोटकै रेडियो त्रिशुलीले आफू र आफ्नो संस्थाद्वारा नुवाकोट जिल्लाको बेलकोट गा.वि.स. मा संचालित साना किसान उद्यमी सवलीकरण परियोजनाको बारेमा भ्रामक समाचारहरु प्रकाशित तथा प्रशारित गरेको, समाचारको सम्बन्धमा खण्डन पठाउँदा समेत त्यसलाई प्रकाशन तथा प्रशारण नगरेकोले आवश्यक कारवाहीका लागि सामुदायिक तथा ग्रामीण विकास समाज नेपालका कार्यकारी निर्देशक पदम उप्रेतीले मिति २०७०।५।२४ गते उजुरी दर्ता गराउनुभएको थियो । उजुरीका सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको वैठकमा छलफल भई निर्णयानुसार सम्बधित पत्रिका र रेडियोलाई खण्डन प्रकाशन/प्रशारण गर्न नमिल्ने कुनै कारण भए ७ (सात)दिनभित्र आधार प्रमाण सहित जवाफ पेश गर्न अन्यथा निवेदकको खण्डन प्रकाशन/प्रशारण गरी काउन्सिललाई जानकारी दिन पत्राचार गरिएकोमा सम्बन्धित पत्रिका र रेडियोले पठाएको जवाफमा निवेदकले पठाएको खण्डन प्रकाशन/प्रशारण गरिसकेको जानकारी दिएकोले आचारसंहिता अनुगमन उपसमितिको निर्णयानुसार उजुरी तामेलीमा राखिएको ।

## ५) दिनेश आचार्य

### विरुद्ध

### निर्वाण चौधरी

सेयर बजार साप्ताहिकको २०७० असार १६ गतेको अंक ४९ मा प्रकाशित "निर्वाण चौधरी यौनकाण्डमा फसे" शीर्षकको समाचारप्रति आपत्ती जनाउँदै चौधरी समूहका प्रबन्ध निर्देशक निर्वाण चौधरीले महानगरीय प्रहरी परिसरमा विद्युतीय कारोवार ऐन अन्तर्गत कारवाही गरी पाउँ भनी उजुरी दिएको र आवश्यक कानुनी प्रक्रिया सुरु भैसकेको कारण "प्रेस स्वतन्त्रताको संरक्षण गर्दै स्वतन्त्रतापूर्वक पेशा व्यवसाय गर्ने वाताबरण बनाइदिनुहुन" भन्ने व्यहोराको निवेदन दिनेश आचार्यले २०७०।३।२६ गते काउन्सिलमा दर्ता गराउनुभएको सम्बन्धमा काउन्सिलमा छलफल हुँदा महानगरीय प्रहरी परिसर, हनुमानढोका, काठमाडौंलाई पत्राचार गरी विद्युतीय कारोवार ऐन आकर्षित नहुने र पत्रपत्रिकामा प्रकाशित समाचार वा सामग्रीबाट कसैको ईज्जत, मानप्रतिष्ठामा धक्का पुगेको वा पत्रकार आचारसंहिता, २०६० को उल्लंघन भएमा सो सम्बन्धी उजुरी लिने तथा कारवाही गर्ने अधिकार प्रेस काउन्सिल ऐन २०४८ को दफा ७ को (घ), (छ) र दफा १२ अनुसार प्रेस काउन्सिल नेपालको भएको जानकारी गराइएको ।

## ६) भूमिराज निरौला

## विरुद्ध

## News 24 (न्यूज ट्वान्टीफोर) टेलिभिजन

न्यूज-24 ट्वान्टीफोर टेलिभिजनबाट पटक-पटक आफ्नो विषयमा गाली बेइज्जती हुने र जनमानसमा भ्रम समेत सिर्जना गर्ने प्रकृतिका सामग्री प्रशारण गरेको र खण्डन पठाउँदा समेत प्रशारण नगरेकोले आवश्यक कारवाहीको लागि चुरे भावर लोकतान्त्रिक पार्टीका अध्यक्ष भूमिराज निरौलाले मिति २०७०।४।२९ गते काउन्सिलमा दर्ता गराउनु भएको उजुरी निवेदनका सम्बन्धमा छलफल हुँदा न्यूज-24 टेलिभिजनलाई निवेदकले पठाएको खण्डन किन प्रशारण नगरिएको हो ? खण्डन प्रशारण गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधारप्रमाण सहित जवाफ पेश गर्न अन्यथा निवेदकको खण्डन अबिलम्ब प्रशारण गरी सोको जानकारी काउन्सिलमा दिन पत्राचार गरिएकोमा मिति २०७०।५।२१ गते न्युज-24को तर्फबाट जवाफ प्राप्त भएको थियो ।

काउन्सिलबाट कारवाही प्रक्रिया अघि बढिरहेको अवस्थामा निवेदक निरौलाले काउन्सिल समेतलाई विपक्षी बनाई सम्मानित सर्बोच्च अदालतमा रिट दायर गर्नुभएको र मुद्दा अदालतमा विचाराधिन रहेको ।

## ७ ) भारतीय राजदूतावास, क्याम्प अफिस, विराटनगर

## विरुद्ध

## न्यू सृष्टि दैनिक

विराटनगरबाट प्रकाशित न्यू सृष्टि दैनिकले आफ्नो विषयमा पटक पटक भ्रामक समाचार प्रकाशित गरेको भनी भारतीय राजदुतावास, क्याम्प अफिस विराटनगरले मिति २०७०।४।२९ गते दिएको उजुरी निवेदनमा आवश्यक कानुनी प्रक्रिया पूरा गर्न काउन्सिलबाट पत्राचार गरेपछि पुनः प्रक्रिया पूरा गरी काउन्सिलसमक्ष अर्को उजुरी निवेदन दर्ता गराएपछि सम्बन्धित दैनिक पत्रिकालाई खण्डन किन प्रकाशित नगरिएको हो ? खण्डन प्रकाशित गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधारप्रमाण सहित जवाफ पेश गर्न अन्यथा निवेदकको खण्डन प्रकाशित गरी काउन्सिललाई जानकारी दिन पत्राचार गरिएकोमा बेवास्ता गरेकोले पुनः ७ (सात) दिनभित्र खण्डन प्रकाशित गरी काउन्सिललाई जानकारी दिन वा सो गर्न नमिल्ने कुनै आधार प्रमाण भए ७ (सात) दिनभित्र पेश गर्न ताकेता गर्ने निर्णयानुसार ताकेता गरिएको ।

### ८) जगदम्बा स्टील प्रा. लि.

### विरुद्ध

### सगरमाथा टेलिभिजन

सगरमाथा टेलिभिजनमा मिति २०७०।९।२२ गते प्रशारित “खोज खवर” कार्यक्रममा जगदम्बा स्टील प्रा. लि. तथा जगदम्बा ब्राण्डलाई आक्षेपयुक्त समाचार सम्प्रेषण एवं प्रशारण सम्बन्धमा खण्डन पठाउँदा समेत खण्डन प्रशारण नगरेकोले आवश्यक कारवाहीका लागि जगदम्बा स्टिल प्रा. लि. का मार्केटिङ म्यानेजर प्रभु आचार्यले २०७०।११।९ गते दिनु भएको उजुरी निवेदनका सम्बन्धमा आवश्यक कारवाही भई २०७०।११।१३ गते सगरमाथा टेलिभिजनलाई पत्र पठाई खण्डन प्रशारण गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधार प्रमाण सहित जवाफ पेश गर्न, अन्यथा निवेदकके खण्डन प्रशारण गरी काउन्सिललाई जानकारी दिन भनिएकोमा, सो टेलिभिजनले मिति २०७०।११।२१ गते काउन्सिलमा दर्ता गराउनुभएको जवाफमा “कार्यक्रम सत्यथ्यमा रहेको र समाचारको सत्यतामा संस्था विश्वस्थ रहँदा रहँदै खण्डन गर्न कुनै जरुरी नरहेको” व्यहोरा उल्लेख भएकोले सो विषयमा आचारसंहिता अनुगमन उपसमितिको बैठकमा छलफल गरिंदा २०७०।११।१३ को पत्रानुसारै अविलम्व खण्डन प्रशारण गर्न, निर्देशन पालना नभए नियमानुसार कारवाही गरिने व्यहोराको पत्राचार २०७१।१।१९ गते गरिएको ।

### ९) सु–सन्देश साप्ताहिक

### विरुद्ध

### नवक्षितिज साप्ताहिकसमेत ३

सु-सन्देश साप्ताहिकका प्रकाशक तथा सम्पादक यदुनाथ गौतमले २०७०।१२।११ मा आफ्नो पत्रिकामा विभिन्न मिति र अंकमा प्रकाशित शीर मेमोरियल अस्पतालसँग सम्बन्धित समाचारका सम्बन्धमा नवक्षितिज साताहिक, नयाँ सञ्चार दर्शन साप्ताहिक तथा काभ्रे टाईम्स साप्ताहिकमा प्रायोजित विज्ञप्तिमार्फत समाचार खण्डन गरी पत्रकारले पालना गर्नुपर्ने आचारसंहिताको उल्लंघन भएकोले आवश्यक कारवाहीका लागि प्रेस काउन्सिल नेपालमा उजुरी दिनुभएको थियो । उक्त उजुरीका सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ वैशाख ८ गतेको बैठकमा छलफल भई यस्तो विषयमा काउन्सिलबाट नीतिगत निर्णय नभइसकेकोले नीति बनाउने निर्णय भएको र सो को जानकारी निवेदकलाई दिईएको ।

## १०) नेशनल मल्टिपल कलेज

### विरूद्ध

### रिपब्लिका दैनिक

रिपब्लिका दैनिकको website मा newsnepalnabin.blogspot.com/2011/05 नाम राखी Students accuse college chairman of sexual harassment शीर्षकको समाचारबाट आफ्नो कलेजको प्रतिष्ठा एवं मर्यादामा आघात पुगेको र सो सम्बन्धमा खण्डन पठाउँदा समेत खण्डन प्रकाशित नगरेकोले आवश्यक कारवाहीको लागि नेशनल मल्टिपल कलेजका प्रशासन प्रमुखले मिति २०७०।४।२२ गते दर्ता गराउनुभएको उजुरीका सम्बन्धमा काउन्सिलबाट आवश्यक कारवाही भई रिपब्लिका दैनिकका सम्पादकलाई निवेदकले पठाएको खण्डन प्रकाशित गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधारप्रमाण सहित जवाफ पेश गर्न भनिएको, अन्यथा अविलम्व खण्डन प्रकाशित गरी काउन्सिललाई जानकारी दिन मिति २०७०।४।२३ मा पत्राचार गरिएको ।

## ११) राम गिरी

### विरूद्ध

### क्राइम टुडे मासिक

क्राइम टुडे मासिक पत्रिकाको विभिन्न अंकहरुमा भ्रामक, कपोलकल्पित र भ्रामक समाचार प्रकाशित गरी आफ्नो चरित्रहत्या गरेको र पत्रिकाका सम्पादकलाई खण्डन प्रकाशित गर्न पत्राचार गरेकोमा खण्डन प्रकाशित नगरेकोले आवश्यक कारवाहीको लागि २०७०।४।१४ गते राम गिरीले दिनुभएको उजुरी सम्बन्धमा आवश्यक कारवाही भइ क्राइम टुडे मासिकका प्रकाशक र सम्पादकको नाम तथा विवरण पठाउन अनुरोध गरी जिल्ला प्रशासन कार्यालय, काठमाडौंमा २०७०।४।१७ गते पत्राचार गरिएको । त्यस्तै, २०७०।४।१७ गते नै सूचना विभागमा पत्राचार गरी क्राइम टुडे मासिकका तर्फबाट प्रेस पास लिएकाहरुको विवरण मागिएको ।

## १२) प्रेमप्रसाद खनाल

## विरुद्ध

## नयाँ पत्रिका समेत अन्य

जिल्ला बन कार्यालय, नुवाकोटका जिल्ला बन अधिकृत प्रेमप्रसाद खनालले नयाँ पत्रिका, दृष्टि, नुवाकोटबाट प्रकाशित हुने त्रिशुली खवर साप्ताहिक समेतले आफ्नो बिरुद्धमा कपोलकल्पित र भ्रामक समाचार सम्प्रेषण गरी व्यक्तिगत तवरबाट मानहानी र अपमान गरेको भनी मिति २०७०।२।१ गते काउन्सिल समक्ष दिनु भएको उजुरी निवेदनका सम्बन्धमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित – २०६४ ) को दफा ५ बमोजिमको कार्यविधि पूरा नगरेकोले सम्बन्धित पत्रिकाको सम्पादकलाई सम्बोधन गरी खण्डन वा गुनासो पठाउन जिल्ला बन कार्यालय, नुवाकोटको नाममा पत्र पठाइएको ।

## १३) धनबहादुर बुढा

## विरुद्ध

## रोल्पा टाइम्स राष्ट्रिय दैनिक

रोल्पा टाइम्स राष्ट्रिय दैनिकले "स्वास्थ्य केन्द्र तीन महिनादेखि डाक्टर बिहिन" शीर्षक राखी कपोलकल्पि र भ्रामक समाचार चरित्र हत्या गरेकोले आवश्यक कारवाही गरिपाउँ भनी मिति २०७०।३।३ गते काउँन्सिल समक्ष दिनु भएको उजुरी निवेदनका सम्बन्धमा पत्रकार आचारसंहिता - २०६० ( संशोधित तथा परिमार्जित - २०६४ ) को दफा ५ को कार्यविधि पुरा नभएकोले आवश्यक प्रक्रिया पूरा गर्न मिति २०७०।४।०१ गते पत्राचार गरिएको ।

## १४) दिपकराज पाण्डे

## विरुद्ध

## मासिक सम्पत्ति आर्थिक पत्रिका :

मासिक सम्पत्ति आर्थिक पत्रिका बर्ष १२, अंक ११, २०७० जेष्ठको अंकमा बाणिज्य तथा आपूर्ति सचिबको आतंक जारी शीर्षकको समाचारबाट सरकारी निकायका उच्च पदाधिकारीको चरित्रहत्या भएको भनी बाणिज्य तथा आपूर्ति मन्त्रालयका उप-सचिव दीपकराज पाण्डेले २०७०।२।१३ गते काउन्सिलमा दिनुभएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलबाट आवश्क कारवाही भई पत्रकार आचारसंहिता-२०६० (संशोधित तथा परिमार्जित - २०६४) को दफा ५ को कार्यविधि पूरा नभएकोले आवश्यक कार्यविधि पूरा गरी आउन बाणिज्य तथा आपूर्ति मन्त्रालय, सिंहदरवारलाई मिति २०७०।४।०१ गते पत्राचार गरिएको ।

## १५) पार्वती थापामगर
## विरुद्ध
## दृष्टि साप्ताहिक

२०७०।४।२९ गतेको बर्ष ३०, अंक ३९ को दृष्टि साप्ताहिकमा प्रकाशित "आईजीको सुराकीमा डिआईजी" शीर्षक र २०७०।५।४ गतेको बर्ष ३०, अंक ४० को दृष्टि साप्ताहिकमा प्रकाशित "प्रचण्डको ओत पाएपछि पार्वती" शीर्षकको कपोलकल्पित समाचारबाट आफूलाई मानसिक पीडा पुगेको र विभिन्न मितिहरुमा समाचारको खण्डन गर्न लिखित आग्रह गर्दा समेत खण्डन प्रकाशित नगरेको भनी नेपाल प्रहरीका तत्कालीन नायव महानिरीक्षक पार्वती थापामगरले मिति २०७०।५।११ गते काउन्सिल समक्ष दिनुभएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलबाट आवश्यक कारवाही भई निवेदकको खण्डन प्रकाशित गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र अधार प्रमाण सहित जवाफ पेश गर्न, अन्यथा निवेदकको खण्डन अविलम्व प्रकाशित गरी काउन्सिललाई जानकारी दिन दृष्टि साप्ताहिकलाई २०७०।५।११ गते पत्राचार गरिएकोमा खण्डन प्रकाशन भएको वा नभएको जानकारी प्राप्त नभएको ।

## १६ ) लालकुमारी खड्का
## विरुद्ध
## साप्ताहिक गोलमेच र अभियान टाईम्स साप्ताहिक

महिला सेल महानगरीय प्रहरी परिसर ललितपुरका प्रहरी नायव निरीक्षक लालकुमारी खड्काले मिति २०७०।५।२८ गतेको साप्ताहिक गोलमेचको पत्रिकाको प्रथम पृष्ठमा "पिडित महिला सईद्वारा झन पिडित" शीर्षकको समाचार र २०७०।५।२० गतेको अभियान टाईम्स साप्ताहिकमा प्रकाशित "परिसर भित्रै दलाली" भन्ने शीर्षकबाट महिला प्रहरी राष्ट्र सेवकको नैतिक एवं व्यक्तिगत आचारण समेतमा आँच आउने समाचारबाट मानसिक रुपले पीडा परेको र सम्बन्धित पत्रिकालाई खण्डन पठाउँदा समेत प्रकाशित नगरेकोले आवश्यक कारवाहीका लागि प्रेस काउन्सिल नेपालमा २०७०६।३ गते दर्ता गराउनु भएको उजुरी निवेदनमा आवश्यक प्रक्रिया पूरा नभएकोले प्रक्रिया पूरा गरी आउन २०७०।६।१० गते पत्राचार गरिएकोमा हालसम्म कुनै जानकारी प्राप्त नभएको ।

## १७ ) भानेन्द्रकुमार लिम्बु

**विरुद्ध**

## आर्थिक राष्ट्रिय दैनिक

स्पार्क हाइड्रोइलेक्ट्रिक कम्पनी लिमिटेडका अध्यक्ष तथा प्रवन्ध सञ्चालक भानेन्द्रकुमार लिम्बुले आर्थिक दैनिकको २०७०।०६।०१ गतेको अंकमा आफू र आफ्नो संस्थाको सम्बन्धमा भ्रामक समाचारहरु प्रकाशित भएको र त्यस सम्बन्धमा खण्डन पठाउँदा समेत प्रकाशित नगरेकोले आवश्यक कारवाही गरिपाउँ भनी मिति २०७०।६।७ गते दर्ता गराउनुभएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलकमा छलफल भई खण्डन किन प्रकाशित नगरिएको हो ? खण्डन प्रकाशित गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधार प्रमाण सहित जवाफ पेश गर्नु अन्यथा निवेदकको खण्डन अविलम्व प्रकाशित गरी काउन्सिललाई जानकारी गराउन मिति २०७०।६।१० गते आर्थिक राष्ट्रिय दैनिकलाई पत्राचार गरिएकोमा आर्थिक राष्ट्रिय दैनिकले २०७०।७।२६ गते पठाएको पत्रमा खण्डन प्रकाशित भैसकेको जानकारी दिएकोले थप कारवाही प्रक्रिया अघि नबढाइएको ।

## १८ ) माधवराज तिवारी

**विरुद्ध**

## www.samajkhabar.com

माउन्टेन टेलिभिजनका समाचार सम्पादक माधवराज तिवारीले समाज खवर डट कम (www.samajkhabar.com) का सञ्चालक नकुल अर्याललाई विपक्षी बनाई महानगरीय प्रहरी परिसर काठमाडौंमा विद्युतीय कारोवार ऐन अनुसार कारवाही गर्न दिनुभएको निवेदनको सक्कलै प्रति सो परिसरबाट काउन्सिलमा प्राप्त भई दुवै पक्षका बीचमा आवश्यक समन्वय समेत गराइदिन अनुरोध भई आएको पत्र मिति २०७०।६।१० गते काउन्सिलमा दर्ता भएकोमा काउन्सिलको आचारसंहिता अनुगमन उपसमितिको बैठकमा छलफल भई २०७०।६।१० गते नै श्री माधवराज तिवारी र श्री नकुल अर्याललाई पत्र पठाई २०७०।०८।२७ गते विहिवार उपस्थित हुन पत्राचार गरिएको थियो । २०७०।०८।२७ गते विहिबार नै दुवै पक्ष उपस्थित भई दुवैले आपसी सहमति गरी चलिरहेको कारवाहीको प्रक्रिया रोकी पाउँ भनी काउन्सिलमा संयुक्त निवेदन दिनुभएकोले कारवाही प्रक्रिया अगाडि नबढाउने निर्णय भएको व्यहोराको जानकारी महानगरीय प्रहरी परिसर, हनुमानढोकालाई गराइएको ।

### १९) स्थानीय पत्रकारहरु

### विरुद्ध

### www.kalaiyalive.com

बाराको कलैयाबाट सञ्चालित www.kalaiyalive.com मा २०७० माघ २४ गते प्रकाशित समाचारले पत्रकारहरुबीच मधेशी र पहाडीया भनेर साम्प्रदायिक हिंसा फैलाउने नियतले समाचार सम्प्रेषण गरेको भन्ने उजुरी अख्तियार दुरुपयोग अनुसन्धान आयोग, केन्द्रीय कार्यालय र मध्यमाञ्चल क्षेत्रीय कार्यालयमा उजुरी परेपछि अख्तियार दुरुयोग अनुन्धान आयोग र मध्यमाञ्चल क्षेत्रीय कार्यालय कार्यालयले प्रेस काउन्सिल नेपाललाई पत्राचार गरेको थियो । उक्त उजुरीका सम्वन्धमा काउन्सिलको उपसमितिको बैठकमा छलफल हुँदा निवेदकका तर्फबाट आचारसंहिता अनुसार पूरा गर्नुपर्ने कार्यविधि पूरा नभएको र निवेदकको पत्राचार ठेगाना समेत नखुलेकोले काउन्सिलबाट कुनै कारवाही गर्न नसकिने जानकारी अख्तियार दुरुपयोग अनुसन्धान आयोग केन्द्रीय कार्यालय र अख्तियार दुरुयोग अनुसन्धान आयोग क्षेत्रीय कार्यालयलाई गराएकोमा पुनः अख्तियार दुरुपयोग अनुसन्धान आयोग केन्द्रीय कार्यालयको मिति २०७० चैत्र १२ गतेको पत्र प्रेस काउन्सिल नेपालमा २०७० चैत्र १३ गते दर्ता गरिएको थियो । www.kalaiyalive.com का सञ्चालक श्री अरुण कुमार साहलाई त्यस्ता समाचारका सन्दर्भमा पूर्णरुपमा सचेत रहन काउन्सिलबाट २०७१।५।११ गते ध्यानाकर्षण गराइएको ।

### २०) ज्योति अधिकारी

### विरुद्ध

### इन्भेष्टिगेशन राष्ट्रिय साप्ताहिकः

इन्भेष्टिगेशन राष्ट्रिय साप्ताहिकले २०७० साल माघ ७ गते प्रकाशित अंकमा “हत्यारालाई राजनैतिक संरक्षण” शीर्षकमा तथ्यहीन र भ्रामक समाचार प्रकाशन गरी आफ्नो चरित्रहत्या गरेको र खण्डन पठाउँदा समेत प्रकाशन नगरेको भनी आवश्यक कारवाहीका लागि इको ट्रेक इन्टरनेसनल प्रा.लि. का अध्यक्ष ज्योति अधिकारीले काउन्सिल समक्ष २०७० साल माघ २२ गते निवेदन दिएको, तत् सम्वन्धमा इन्भेष्टिगेशन राष्ट्रिय साप्ताहिकलाई निवेदकको खण्डन प्रकाशन गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधारप्रमाण सहित जवाफ पेश गर्न अन्यथा निवेदनको खण्डन अविलम्ब प्रकाशित गरी काउन्सिललाई जानकारी दिन २०७० साल चैत्र फागुन १ मा पत्राचार भएकोमा सो साप्ताहिकले सभ्य भाषामा लेखि आएमा खण्डन प्रकाशन गर्ने भन्ने व्यहोराको जवाफ पेश गरेको सम्बन्धमा काउन्सिलको उपसमितिको बैठकमा छलफल हुँदा निवेदकको खण्डनको भाषा असभ्य भएको नदेखिएकोले अविलम्व निवेदकको खण्डन प्रकाशित गर्ने अन्यथा नियमानसार कारवाही गरिने व्यहोरा सहित इन्भेष्टिगेशन राष्ट्रिय साप्ताहिकलाई पत्राचार गरिएको ।

**२१) विश्वेन्द्र पासवान**

**विरूद्ध**

**जनआस्था साप्ताहिक समेत ४ (चार)**

दलित जनजाति पार्टीका अध्यक्ष तथा संविधानसभाका सदस्य विश्वेन्द्र पासवानले आफ्नो चरित्रहत्या गरेको भनी २०७० साल माघ २९ गतेको जनआस्था साप्ताहिक, फागुन १५ गतेको रातोपाटी डटकम, फागुन १६ गतेको जनआह्वान साप्ताहिक र फागुन १८ गतेको राजतिलक साप्ताहिकले भ्रामक समाचार प्रकाशित गरेकोले आवश्यक कारवाही गरी पाउँ भनी २०७० साल फागुन १० गते दर्ता गराउनु भएको उजुरी निवेदनका सम्बन्धमा पत्रकार आचारसंहिता २०६० को दफा - ५ अनुसारको कार्यविधि पूरा गरेको नदेखिएकोले सो कार्यविधि पूरा गरी आउन पत्राचार गरिएको ।

**२२) ङिमा शेर्पा**

**विरूद्ध**

**हिमगाथा राष्ट्रिय साताहिक**

२०७१ साल असार १६ गते सोमवारको हिमगाथा राष्ट्रिय साप्ताहिकमा शेर्पा महिला संघकी उपाध्यक्ष पसी शेर्पाको अन्तरवार्तामा आफू र आफ्नो संस्थाको बारेमा गलत सामग्री प्रकाशित गरी भ्रम सिर्जना गरेकोमा सो पत्रिकाका सम्पादकलाई खण्डन प्रकाशन गर्न लिखित आग्रह गर्दा समेत वेवास्ता गरेकोले आवश्यक कारवाही गरी पाउँ भनी नेपाल शेर्पा महिला संघकी अध्यक्ष ङिमा शेर्पाले मिति २०७१ साल असार २४ गते प्रेस काउन्सिल नेपालमा दर्ता गराउनु भएको उजुरी निवेदन अध्ययन गरी सोही दिन हिमगाथा साप्ताहिकलाई खण्डन सम्वन्धी पत्राचार गरिएकोमा खण्डन समाचार प्रकाशित गर्ने बारे आफ्नो ध्यानाकर्षण भएको जानकारी सहितको पत्र काउन्सिललाई २०७१ साल असार २९ गते प्राप्त भएकोले आवश्यक प्रक्रियामा रहेको ।

**२३) सुसन सर्जन रामदाम**

**विरूद्ध**

**तिलहरी साप्ताहिकः**

साप्ताहिकको अंकमा आफ्नो चरित्रहत्या हुने गरी भ्रामक र कपोलकल्पित समाचार प्रकाशित गरेको र पत्रिकाका सम्पादकलाई खण्डनको लागि लिखित निवेदन पठाउँदा समेत वेवास्ता गरेका कारण आवश्यक कारवाहीको लागि प्रेस काउन्सिल नेपालमा २०७० साल असार २१ गते उजुरी निवेदन दिनु भएकोमा काउन्सिलबाट आवश्यक कारवाही भई तिलहरी साप्ताहिकले मिति २०७० साल साउन ७ गते पठाएको खण्डन प्रकाशन नगर्ने सम्वन्धी लिखित जवाफ काउन्सिलमा दर्ता भई आवश्यक थप प्रक्रिया जारी रहेको ।

### (२४) महेन्द्रप्रसाद साह

**विरुद्ध**

**विश्वजागरण दैनिकः**

हलवाई समाज सेवा समितिका अध्यक्ष महेन्द्र प्रसाद साहले आफू र आफ्नो संस्थाका पदाधिकारीहरुको विषयमा विश्वजागरण दैनिकको २०७० साल साउन १० गतेको अंकमा गलत र पूर्वाग्रहीपूर्ण समाचार प्रकाशन गरेको र खण्डन पठाउँदा पनि खण्डन प्रकाशित नगरेकोले आवश्यक कारवाहीका लागि २०७० साल साउन २८ गते काउन्सिलमा दिनुभएको उजुरी निवेदनका सम्वन्धमा आवश्यक कारवाही भई काउन्सिलबाट २०७० साल भाद्र १३ गते खण्डन प्रकाशन सम्वन्धमा विश्वजागरण दैनिकलाई पत्राचार गरिएको तर हालसम्म खण्डन प्रकाशन भए नभएको जानकारी प्राप्त हुन नआएको ।

### (२५) पार्वती थापामगर

**विरुद्ध**

**तरुण साप्ताहिक**

नेपाल प्रहरीकी प्रहरी नायव महानिरीक्षक पार्वती थापामगरले, २०७०।५।१० गतेको बर्ष १७, अंक १९ को तरुण साप्ताहिकले "आईजीपी खोज्दै भोजनगृहमा" शीर्षकमा प्रकाशित गरेको समाचारबाट आफ्नो चरित्रहत्या भएको र खण्डन पठाउँदा पनि खण्डन प्रकाशित नगरेकोले आवश्यक कारवाहीका लागि २०७०।५।१९ गते दर्ता गराउनुभएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलबाट आवश्यक कारवाही भई खण्डन खण्डन प्रकाशन सम्बन्धमा तरुण साप्ताहिकलाई २०७०।५।१९ गते नै पत्राचार गरिएकोमा खण्डन प्रकाशित भए वा नभएको जानकारी प्राप्त हुन नआएको ।

### २६) टिका पनेरु र यादव जोशी

**विरुद्ध**

**www.topnepalnews.com**

वीर अस्पतालका सि. अ.हे.व. टिका पनेरु र अ.हे.व.यादव जोशीले २०७० श्रावण २५ गतेको www.topnepalnews.com समाचारले आफ्नो चरित्रहत्या भएकोले आवश्यक कारवाहीका लागि प्रेस काउन्सिल नेपालमा २०७०।४।२८ गते दिनु भएको उजुरी निवेदन कारवाहीको प्रक्रियामा रहेको ।

## २७) पीडित बेत्रावतीका महिलाहरु

### विरुद्ध

### रेडियो त्रिशुली :

रेडियो त्रिशुलीले नुवाकोट र रसुवा जिल्लाका महिलाहरुलाई नै बदनाम गराउने गरी भ्रामक समाचार प्रशारण गरेको सम्बन्धमा प्रेस काउन्सिल नेपालमा ईमेल मार्फत प्राप्त भएको उजुरीको अध्ययन गरी सोही दिन ईमेल मार्फत जवाफ पठाई पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४) को दफा ५ को कार्यविधि पूरा गरी उजुरी दिन जानकारी गराईएको ।

## २८) प्रदिप कोइराला

### विरुद्ध

### आर्थिक दैनिक:

आर्थिक दैनिकको २०७० माघ ७, ८, ९, १२ र १५ गतेको अंकमा आफ्नो संस्थाको सम्बन्धमा तथ्यहिन, भ्रामक र दुराशययुक्त एवं गलत मनसायले प्रायोजित समाचारहरु प्रकाशित गरेको र खण्डन पठाउँदा समेत प्रकाशित नगरेको र पुनः २०७० माघ २१ गते "अरनिको सिमेन्टको लगानी शंकास्पद" भनी अर्को समाचार प्रकाशित भएको प्रति गम्भीर आपत्ति प्रकट गरी आवश्यक कारवाहीका लागि अरनिको सिमेन्ट इन्डष्ट्रिज प्रा.लि. का निर्देशक प्रदिप कोइरालाले २०७०।१०।२५ गते दिनुभएको उजुरी निवेदनका सम्बधमा काउन्सिलले अध्ययन गर्दा खण्डन किन प्रकाशित नगरिएको हो ? खण्डन प्रकाशित गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधार प्रमाण सहित जवाफ पेश गर्नु अन्यथा निवेदकको खण्डन प्रकाशित गरी काउन्सिललाई जानकारी दिन मिति २०७०।११।०१ मा पत्राचार गरिएकोमा आर्थिक दैनिकका तर्फबाट खण्डन प्रकाशित भैसकेको जानकारी प्राप्त हुन आएकोले थप आवश्यक कारवाही गरिरहन नपरेको ।

## २९) राजेशमान सिंह श्रेष्ठ

### विरुद्ध

### आलिशान दैनिक

राष्ट्रिय मधेशवादी पार्टीको केन्द्रीय सदस्य राजेशमान सिंहको बारेमा आलिशान दैनिकको विभिन्न अंकहरुमा कपोलकल्पित र आपत्तिजनक तथ्यहरु उल्लेख गरी चरित्र हत्या गर्ने उद्देश्यले समाचार र फोटो समेत प्रकाशन गरेको र विभिन्न मितिहरुमा खण्डन प्रकाशन गर्न पत्र पठाएकोमा खण्डन पनि प्रकाशन नगरेकोले आवश्यक कारबाही गरी पाउँ मिति २०७१।३।२२ गते दर्ता गराउनु भएको उजुरी-निवेदनका सम्बन्धमा काउन्सिलमा छलफल भई निवेदकले पठाएको खण्डन किन प्रकाशित नगरिएको हो ? खण्डन प्रकाशित गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिन भित्र आधार प्रमाण सहित जवाफ पेश गर्न, अन्यथा निवेदकको खण्डन अविलम्व प्रकाशन गरी काउन्सिललाई जानकारी दिन मिति २०७१।३।३१ गते आलिशान दैनिकका सम्पादकलाई पत्राचार गरिएकोमा हालसम्म कुनै जानकारी प्राप्त नभएको ।

## ३०) नारायण जोशी

### विरुद्ध

### बलदेव सिंह धामी

दार्चुला एफ.एम. का पत्रकार बलदेव सिंह धामीले सामाजिक सञ्जाल मार्फत झुठो विवरण सार्वनिक गरी संस्थाको प्रतिष्ठामा आँच ल्याउने काम गरेकोले आवश्यक कारवाहीको लागि संकल्प-दार्चुला नामक संस्थाका संयोजक नारायण जोशीले फ्याक्स मार्फत २०७१।२।११ गते काउन्सिलमा दर्ता गराउनुभएको उजुरी निवेदनका सम्वन्धमा काउन्सिलमा छलफल हुँदा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६० ) को दफा - ५ अनुसारको कार्यविधि पूरा नभएकोले आवश्यक कार्यविधि पूरा गर्न पत्राचार गरिएकोमा हालसम्म कुनै जानकारी नभएको ।

### ३१ )डा. अजय साह

### विरूद्ध

### अपडेट जनकपुर :

जनकपुरबाट निस्कने पत्रिका अपडेट जनकपुरको २०७० पौष ३० गतेको अंकमा प्रकाशित “सर्वसाधारणलाई झुक्याउँदै चेम्वर्स, छुट्टै अनुगमन हुने” शीर्षकको समाचार विरुद्ध डा. अजय साहले २०७१।३।१८ गते काउन्सिलमा दर्ता गराउनु भएको उजुरी निवेदनमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा रिमार्जित - २०६४) को दफा - ५ अनुसारको कार्यविधि पूरा गरेको नदेखिएकोले सो कार्यविधि पूरा गर्न मिति २०७१।३।३० गते काउन्सिलबाट पत्राचार गरिएको ।

### ३२ ) बीरेन्द्रबहादुर बस्नेत

### विरूद्ध

### reporsnepal.com :

बुद्ध एयर प्रा. लि., जावलाखेल -४, ललितपुरको प्रबन्ध निर्देशक बीरेन्द्र बहादुर बस्नेतले, २०७१।२।२९ गतेको reporsnepal.com मा मुख पृष्ठको बिविध शीर्षकमा झुट्टा समाचार प्रकाशन गरेको र खण्डन प्रकाशन गर्न पत्र पठाएकोमा खण्डन पनि प्रकाशन नगरेकोले आवश्यक कारवाहीका लागि मिति २०७१।३।१३ गते काउन्सिलमा दर्ता गराउनु भएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलमा छलफल भई निवेदकको खण्डन प्रकाशन गर्न नमिल्ने कुनै कारण भए आधार प्रमाण सहित जवाफ पेश गर्न, अन्यथा निवेदकको खण्डन प्रकाशन गरी काउन्सिललाई जानकारी दिन मिति २०७१।३।३० गते पत्राचार गरिएको ।

### ३३ ) हरिप्रसाद उप्रेती

### विरूद्ध

### www.onlinekhabar.com

चितवनबाट प्रकाशित जोश साप्ताहिक पत्रिकाको विषयमा २०७१ बैशाख २० गतेको onlinekhabar.com मा झुट्टा समाचार प्रकाशन गरेको र खण्डन प्रकाशन गर्न पत्र पठाएकोमा खण्डन पनि प्रकाशन नगरेको भनी जोश साप्ताहिकका सम्पादक हरिप्रसाद उप्रेतीले २०७१।२।१४ गते दर्ता गराउनु भएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलबाट मिति २०७१।३।३० गते onlinekhabar.com लाई पत्राचार गरी खण्डन प्रकाशन गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधार प्रमाण सहित जवाफ पेश गर्न अन्यथा निवेदकको खण्डन अविलम्ब प्रकाशन गरी काउन्सिललाई जानकारी गराउन पत्राचार गरिएको ।

## ३४ ) पार्वती खड्का

**विरुद्ध**

**कृष्ण सुवेदी :**

नेपाल पत्रकार महासंघ, हिमालय टाईम्स शाखा सदस्य कृष्ण सुवेदीले सामाजिक सञ्जाल फेस बुक मार्फ आफ्नो चरित्र हत्या हुने गरी घृणित र कपोलकल्पित शब्दहरु प्रयोग गरी समाचार प्रकाशन गरेकोले आवश्यक कारवाहीका लागि मून लाईट ईन्टरनेशनल प्रा. लि. का सञ्चालक पार्वती खड्काले २०७१।२।५ गते काउन्सिलमा दर्ता गराउनु भएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलमा छलफल भई के कसो भएको हो ? यथार्थ विवरण सहित जवाफ पेश गर्न काउन्सिलबाट २०७१।२।१२ गते पत्राचार गरिएकोमा हिमालपोष्ट दैनिकका प्रकाशक एवं सम्पादक कृष्ण सुवेदीले मिति २०७१।२।१८ गते पेश गर्नु भएको लिखित जवाफ काउन्सिलमा दर्ता भई आवश्यक प्रक्रियामा रहेको ।

## ३५ ) मानव अङ्ग प्रत्यारोपण केन्द्र

**विरुद्ध**

**www.swasthyakhabar.com**

मिति २०७१।१।७ गतेको www.swasthyakhabar.com (स्वस्थ्य खवर डट कम) मा प्रकाशित “मानव अङ्ग प्रत्यारोपण केन्द्रमा अनियमितता” शीर्षकमा झुट्टा विवरणहरु गरी सर्वसाधारणलाई भ्रमित पार्ने काम गरेकोले आवश्यक कारवाहीको लागि प्रेस काउन्सिल नेपालमा मिति २०७१।१।१५ गते दर्ता गराउनुभएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलमा छलफल हुँदा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा - ५ को कार्यविधि पूरा नभएकोले आवश्यक कार्यविधि पूरा नभएकोले आवश्यक कार्यविधि पूरा गर्न २०७१।२।१ गते काउन्सिलबाट पत्राचार गरिएको ।

## ३६ ) नेपाल विद्यार्थी संघ, जिल्ला समिति, सोलुखुम्वु

**विरुद्ध**

**हिमाल एफ. एम.**

नेपाल विद्यार्थी संघ, जिल्ला समिति, सोलुखुम्वुसँग सम्बन्धित समाचारहरु गलत, भ्रामक र अति पूर्वाग्रही ढंगबाट समाचार संप्रेषण गरेकोले आवश्यक कारवाहीका २०७१।१।२३ गते प्रेस काउन्सिल नेपालमा दर्ता गराउनु भएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलमा छलफल हुँदा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा - ५ को कार्यविधि पूरा नभएकोले आवश्यक कार्यविधि पूरा नभएकोले आवश्यक कार्यविधि पूरा गर्न मिति २०७१।२।१ गते काउन्सिलबाट पत्राचार गरिएको ।

